भण्डेलहरू काठमाडौंमा इन्द्रचोक, वाङ्गेमुढादेखि उत्तर, ठमेलदेखि दक्षिण, क्षेत्रपाटीदेखि पूर्व र त्यौड, असनटोलदेखि पश्चिममा हाल काठे स्वयम्भूको वरिपरिको भाग हाल नघलटोमा (प्राचीनकाल भन्नाले मल्लकालको शुरुवात देखि नै) बसोबास गर्ने गर्दथे । अझ त्यसभन्दा पनि अघि विक्रम सम्वत् ८७० तिर विजेश्वरी (विद्याधरी वा आकाशयोगिनी) को स्थापनाकालसँगै भण्डेलहरूको नघलमा अवस्थिति रहेको तथ्य जोडिन आउँदछ ।

भण्डेल शब्दको अर्थ वास्तवमा भण्डारी अथवा भण्डारनायक हो । पछि त्यो शब्द विकृत भएर भरी र आजभोली भनी हुनआएको छ । यसैको पूर्वनामसित मेलखाने गरी संस्कृत गरिएको नाम चाहिं राजभण्डारी हो । भण्डेलहरूको प्राचीनताको अन्वेषण गर्दा विभिन्न अभिलेख र अन्य ऐतिहासिक साक्ष्यहरूले भण्डेलहरू नःघल टोलमा शिवदेव द्वितीय (लिच्छवि) कै समय देखिनै रहेको तथ्य पुष्ट गर्दछन् । यही नःघल टोलको भण्डेल परिवारमा ग्रन्थकार नवमी सिंह भण्डेल राजनीति र धर्म, धर्म पनि तान्त्रिक धर्मको स्वच्छ आकाशमा उज्ज्वल ताराको रूपमा प्रकाशमान भएको तथ्य इतिहासले बताउँदछ । वि.सं. १७३१ मा प्रतापं मल्लका छोरा नृपेन्द्र मल्लको राज्यकाल शुरु हुन्छ । वि.सं. १७३७ मा पुनः पार्थिवेन्द्र मल्ल राजगद्दीमा बस्छन् । त्यसबेलाका पाँच जना भारदारी (काजी) मध्ये एकजना मानसिंह भण्डेल पनि विद्यमान देखिन्छन् । राजा पार्थिवेन्द्र मल्ल विषप्रयोगबाट दिवंगत भएपछि काजी मानसिंह भण्डेल पनि हत्याको शङ्कामा मुछिन्छन् । त्यसैबेला उनका जेठा छोरा नवमीसिंह भण्डेल महानायक (सैनिक अफिसर) भइसकेका देखिन्छन् । वि.सं. १७४४ मा भूपालेन्द्र मल्लले राजगद्दी पाउँदछन् । उनैका पालामा मानसिंह भण्डेल वि.सं. १७४७ चौतारा महामात्य (प्रधानमन्त्री) हुन्छन् । तीन वर्ष प्रधान मन्त्रित्वको भार सम्हालिसकेपछि उनी राजनीतिको पेचको शिकार बनेर प्रधानमन्त्रीको पदबाट बाहिर आउँछन् । आफ्नो बाबुपछि वि.सं. १७५२ मा उनका जेठा छोरा नवमीसिंह भण्डेल महामात्य हुन पुग्छन् ।

चौतारा महामात्य नवमीसिंह भण्डेल (न:घ: भनी) को जन्म कोलिग्राम यम्बु कान्तिपुर सुवर्ण प्रणालीनगर गांगुलीपतन शान्तिघट स्थान नवघटटोल ग्वाथनती यन्ता छें भन्ने घरमा रामनवमीका दिन भएको हो । पुण्यपर्व रामनवमीका दिन जन्म भएकोले उनको नाम पनि नवमीसिंह रह्यो । उनको जन्म वर्ष तोक्न सकिने कुनै साक्ष्य त फेला परेको छैन तापनि वि.सं १७४४ मा सेना लिन उनी गोरखा गएको भन्ने प्रमाण फेला परेको हुँदा त्यतिबेला उनी ३५-४० वर्षका थिए होलान् भन्ने अनुमान गर्ने हो भने संभवत: वि.सं. १७०४ देखि १७०९ को आसपास भयो होला भन्ने अनुमान गर्न सकिन्छ । उनका पिता मानसिंह भण्डेल र आमा सुमंगला भण्डेल एवं मामाहरू भने विद्देवाहालका हाकुपेर्मा तुयूपेर्माहरू थिए ।

महामात्य नवमीसिंह भण्डेलको बाल्यकाल त सुखपुर्वकै बित्छ र जब उनी यौवन अवस्थामा पुग्दछन्, स्वाभाविक रूपले उनीमाथि व्यवहारको भार पर्दछ । उनको दुई विवाह भएको देखिन्छ । उनका पत्नीहरू रत्नेश्वरी र अन्नपूर्णा थिए । दुई विवाह भए तापनि उनको कुनै छोरा थिएन । दुई वटी छोरीहरू मात्र थिए ।

महामात्य नवमी सिंहको प्राथमिक शिक्षा धेरै जसो घर मै भयो । त्यसै वेला आजभोलि जस्तो विद्यालयहरू नभएकाले शिक्षा लिन गुरुको घरमा जानु पर्दथ्यो । नवमी सिंह पनि आफ्ना पुर्ख्यौली गुरु आद्यानन्द कहाँ शिक्षा लिन गए । उनका गुरु आद्यानन्द हुन् भनी उनले आफैले लेखेको ग्रन्थ "कुलमुक्तिकल्लोलिनी" मा चर्चा गरेका छन् । त्यसबेला सबभन्दा ठूलो संस्कृत शिक्षा भएकोले उनले प्रथमत: संस्कृत पढे र पछि पुर्ख्यौली परम्पराअनुरूप तन्त्रशास्त्रको पनि अध्ययन राम्ररी गरे ।

तन्त्रशास्त्रको अध्ययन कुल परम्पराअनुसार ज्यादै गोप्यतापूर्वक गर्ने र त्यसका कर्मकाण्ड पनि आफ्नै कुलका दीक्षित व्यक्तिमा मात्र सीमित राख्ने प्रथा भए तापनि नवमी सिंहले त्यसो गरेनन् । परम्परालाई अलिकति नाघेर भए पनि केही ग्रन्थहरूको रचना गरे ।

**महामात्य नवमीसिंहका प्रमुखग्रन्थहरू-**

१. प्रस्तुत ग्रन्थ तन्त्रचिन्तामणि (संग्रहग्रन्थ)।

२. कुलमुक्तिकल्लोलिनी (कुलाचारको रहस्यमय ग्रन्थ)।

३. चण्डीभक्तिविनोदिनी (सप्तशती प्रयोगपरक ग्रन्थ) र

४. पुष्परत्नाकर।

महामात्य नवमी सिंहका उक्त चारै वटा ग्रन्थहरू आ-आफ्ना स्थानमा ज्यादै महत्त्वपूर्ण एवं उपयोगी ग्रन्थहरू हुन् । उनका यी ग्रन्थहरू हस्तलिखितरूपमा कुनै नेवारी र कुनै देवनागरी लिपिमा उतारिएका प्रतिहरू राष्ट्रिय अभिलेखालय, दीक्षित परिवारहरू, तान्त्रिकग्रन्थका संग्रहकर्ताहरूका घरमा बडो आदरपूर्वक संगृहीत भएको पाउँदा उनका ग्रन्थहरूको कदर त्यसबेला निकै राम्ररी भएको तथ्य स्पष्ट हुन्छ ।

नवमीसिंह स्वयं विद्वान् हुनुका साथै दीक्षित व्यक्ति पनि थिए । उनका दीक्षा गुरु मखनटोलका तत्कालीन विद्वान् नीलकण्ठेश्वर, सर्वेश्वर र देवेश्वर हुनुपर्दछ भन्ने अनुमान गरिन्छ । नवमीसिंहले निकै गुठीहरू पनि राखेका छन् र देव देवालयहरूको प्रतिष्ठा एवं निर्माण पनि गरेका छन् । उनका कीर्तिहरू अद्यावधि छँदै छन् र उनले चलाएको परम्परा उनका भाइ-भतिजाका सन्तानहरूले अद्यावधि थामिआएका पनि छन् ।

महामात्य नवमी सिंह एक विद्वान् धर्मपरायण, कुशल राजनीतिज्ञ, कुशल योद्धा, तान्त्रिक ज्ञान र कर्मकाण्डका मर्मज्ञ, कुशल लेखक भइकन पनि कत्ति महत्त्वाकांक्षी थिएनन् । उनी एउटा देशभक्त र राजभक्त पनि थिए । पछि वि.सं. १७५८ मा भास्कर मल्ल राजा हुँदा उनको सम्पूर्ण राज्य व्यवस्था हेर्ने प्रमुख व्यक्तित्व नवमी सिंह नै थिए । महामात्य नवमी सिंह वि.सं. १७६० आश्विन वदि तृतीयाका दिन दुई पत्नी र धर्मपुत्रहरूलाई छोडी यस अनित्य संसारलाई त्यागेर गए । पछि उनका पत्नीहरू रत्नेश्वरी वि.सं. १८०९ मा र अन्नपूर्णा वि.सं. १८११ मा दिवंगत भए ।

महामात्य नवमी सिंह पछि पनि प्रधान मन्त्रित्वको पद उनका परिवारमा केही समयसम्म रहन गयो र हनुमानढोकाका धार्मिक कृत्यहरूमा पनि तन्त्रविद्‌का हैसियतले उनका परिवारको वर्चस्व धेरै समयसम्म कायमै

रह्यो । विशेषतः उनका आफ्नै माहिला भाइ अनन्तसिंह भण्डेलको नाम र कीर्ति पनि दाजु नवमी सिंहको जस्तै उज्ज्वल रहेको देखिन्छ । त्यति मात्र होइन अजसम्म पनि नःघःल टोलमा भण्डेलहरूका धेरै घरहरू छन् । उनीहरू अब राजभण्डारी अथवा न.घःभनी (भण्डारी) का रूपमा चिनिन्छन् । उनीहरूमा अद्यावधि आफ्नो कुलप्रति गौरव छ, धर्मप्रति आस्था छ, तन्त्रप्रति निष्ठा छ र आफ्ना पुर्खा महामात्य नवमी सिंहप्रति गौरव विद्यमान छ [१] ।

## तन्त्रचिन्तामणि ग्रन्थमा प्रतिपादित विषयवस्तु

धर्म, अर्थ, काम र मोक्ष यी चार पुरुषार्थहरूमा परम पुरुषार्थ मोक्षलाई मानिन्छ । मोक्ष एउटा यस्तो स्थिति हो जहाँ गएर सम्पूर्ण प्रवृत्तिहरूले सार्थकता पाउँदछन्, सम्पूर्ण प्रतिकूलताहरूको अन्त्य हुन्छ; जहाँ गएर पुनः फर्केर आउनुपर्दैन, जसलाई पाएपछि पाउनुपर्ने वस्तु कुनै पनि बाँकी रहँदैन, त्यही स्थिति सत्, चित् र आनन्दको स्थिति हो । धर्म, अर्थ र काम यी तीन वटै पुरुषार्थ पनि त्यतैतिर अभिमुख हुन्छन् । त्यसैले मोक्ष नै सम्पूर्ण जगत्को परम लक्ष्य हो ।

मोक्ष प्राप्त गर्ने एउटै उपाय छ त्यो हो ज्ञान । ज्ञान नभई मोक्ष सम्भवै छैन । विद्वान्हरू भक्तिलाई ज्ञानभन्दा पनि ठूलो मानेर ईश्वरीय कृपालाई मोक्षको कारण मान्दछन् । तर वास्तवमा प्रथम भक्ति प्राप्त गरेकालाई पनि ईश्वरीय कृपाले ज्ञान प्राप्त हुन्छ, अनि मात्र मोक्ष हुन्छ, यही दार्शनिकहरूको निष्कर्ष हो ।

ज्ञानको अजस्र स्रोत हो शासन । ऐहिक र आनुश्रविक उपायबाट दुःखको ऐकान्तिक र आत्यन्तिक निवृत्ति हुन न सक्ने हुनाले परम कारुणिक शिवले अज्ञात (मिथ्याज्ञान) रूप पशुत्वबाट जीवरूप पशुलाई मुक्त गर्न शास्त्रहरूको आविर्भाव गर्नुभयो । शास्त्रद्वारा निर्दिष्ट मार्गको

---

१. महामात्य नवमी सिंहको प्रस्तुत इतिवृत्त उनकै खलकभित्रका एकजना ज्यादै परिश्रमी र प्रतिभासम्पन्न तन्त्रदीक्षित व्यक्ति तीर्थलाल नःघःभनी (भण्डारी) ले निकै अनुसन्धान गरी लेख्नु भएको लेखबाट उहाँकै सौजन्यबाट निकालिएको हो । यहाँ त केवल प्रस्तुत ग्रन्थको परिचयको निमित्त नभइ नहुने अंश मात्र लिइएको छ । मूल लेख त ज्यादै विस्तारमा छ । निकै ऐतिहासिक साक्ष्यहरू त्यहाँ प्रमाणका रूपमा प्रस्तुत भएका छन् ।

अवलम्बनबाट प्राणीहरू मिथ्याज्ञानको प्रभाववाट मुक्त भए । भगवान् शिव पशुपति स्वरूपमा पूज्य हुन पुग्नुभयो ।

प्राच्य संस्कृतिमा ज्ञानका प्रमुख स्रोत विद्या दुईवटा मानिएका छन् -निगम र आगम । वेद, वेदाङ्ग र तदुपजीवक श्रुति, स्मृति आदि निगमभित्र पर्दछन् भने शिववक्त्रबाट निःसृत द्वैत, द्वैताद्वैत र अद्वैत तत्त्वका प्रतिपादक विद्या आगमभित्र पर्दछन् । आगम र तन्त्र यी दुई शब्दका व्युत्पत्तिलभ्य अर्थ एउटै नभए जस्तो लागे तापनि वस्तुतः यी दुवै योगरूढ शब्द हुन् र एउटै प्रकारको अर्थ वुझाउने पर्यायवाची नै हुन् ।

**आगम र तन्त्र शब्दको परिभाषा-**

**आगतं शिववक्त्रेभ्यो गतञ्च गिरिजामुखम् ।**
**मतं श्रीवासुदेवस्य तस्मादागम उच्यते ॥**

आगमशास्त्र शिववक्त्रबाट निस्केर (भगवान शिवले उपदेश गरेको) पार्वतीले सुन्नु भएको श्रीविष्णुबाट पनि अभीप्सित शास्त्र नै आगम हो । यहाँनिर तन्त्रचिन्तामणिकारले उक्त श्लोकको तेस्रो पाउमा "मलत्रय-विनाशित्वात्" (माया मल, कार्ममल र आणव मल तीनैवटालाई नाश गर्ने शास्त्र भएकोले) भनेर आगमको प्रयोजनपरकता पनि स्पष्ट पारेका छन् । श्रीवाचस्पति मिश्रले तत्त्ववैशारदीमा -**"आगच्छन्ति बुद्धिमारोहन्ति यस्माद् अभ्युदयनिःश्रेयसोपायाः स आगमः"** भनेर अभ्युदय र निःश्रेयसको उपाय बताउने शास्त्रलाई आगम भनेर परिभाषित गरेका छन्, यसरी आगम धर्मशास्त्र पनि सिद्ध हुनआएको छ । महाकवि कालिदासले-

**"बहुधाप्यागमैर्भिन्नाः पन्थानः सिद्धिहेतवः"** । भनेर आगम समस्त अणिमा, महिमा, लघिमा, गरिमा, प्राप्ति, प्राकाम्य, ईशित्व र वशित्व यी अष्टसिद्धि प्राप्त गर्ने उपाय शास्त्र हो भनेका छन् । वाराहीतन्त्र आगमको लक्षण बताउँदछ -

**सृष्टिश्च प्रलयश्चैव देवतानां तथार्चनम् ।**
**साधनं चैव सर्वेषां पुरश्चरणमेव च ॥**
**षट्कर्म साधनं चैव ध्यानं योगचतुर्विधः ।**
**सप्तभिर्लक्षणैर्युक्तमागमं तं विदुर्बुधाः॥**

सृष्टि, प्रलय, देवताहरूको अर्चनप्रक्रिया, मन्त्रहरूको साधन, पुरश्चरणविधि, मारण, मोहन, स्तम्भन, उच्चाटन, विद्वेषण र वशीकरण यी छवटा (अभिचारकर्म) का साधन, हठयोग, मन्त्रयोग, राजयोग र लाभयोग यी चार प्रकारका ध्यानयोगका उपायगत प्रक्रिया वताउने शास्त्र आगम हो । तन्त्र शब्दको चाहि व्युत्पत्तिलभ्य अर्थ हुन्छ शासन-

**तनोति विपुलानर्थान् तन्त्र (तत्त्व) मन्त्रसमन्वितान् ।**

**त्राणं च कुरुते यस्मात् तन्त्रमित्यभिधीयते ॥**

तन्त्र एउटा यस्तो साधनाको मार्ग हो जसको अनुसरण गर्ने मानव मात्रले भववन्धन जन्य दुःखबाट त्राण पाउन सक्छ, भन्ने यसको भाव हो । आगमको लक्षण जस्तै तन्त्रको पनि लक्षण गरिन्छ-

**सर्गश्च प्रतिसर्गश्च मन्त्रनिर्णय एव च ।**
**देवतानां च संस्थानं तीर्थानाञ्चैव वर्णनम् ॥**
**तथैवाश्रमधर्मश्च विप्रसंस्थानमेव च ।**
**संस्थानञ्चैव भूतानां यन्त्राणां चैव निर्णयः ॥**
**उत्पत्तिर्विबुधानां च तरूणां कल्पसंज्ञितम् ।**
**संस्थानं ज्योतिषां चैव पुराणाख्यानमेव च ॥**
**कोषस्य कथनं चैव व्रतानां परिभाषणम् ।**
**शौचाशौचस्य चाख्यानं नरकाणां च वर्णनम् ॥**
**हरचक्रस्य चाख्यानं स्त्रीपुंसोश्चैव लक्षणम् ।**
**राजधर्मो दानधर्मो युगधर्मस्तथैव च ॥**
**व्यवहारः कथ्यते च तथा चाध्यात्मवर्णनम् ।**
**इत्यादिलक्षणैर्युक्तं तन्त्रमित्यभिधीयते ॥**

तन्त्रका यी लक्षणहरू हेर्दा तन्त्रशास्त्रको इयत्ता, महत्ता र उपादेयता स्पष्ट हुन्छ ।

## आगम वा तन्त्रको वेदसितको सम्बन्ध

तन्त्रचिन्तामणिकार भन्छन् -

**ज्ञायते तत्प्रभावेण सकलं वेदवाक्यत:।**
**वेदेभ्य: सारमुद्धृत्य यत्कृतं शङ्करेण वै ।**
**वेदाधिकतया देवि आगम: परिकीर्तित: ॥**

वेदकै सारांश तन्त्र हो भन्ने यस वाक्यको आशय स्पष्ट छ । आगम वा तन्त्र वैदिक हो वा अवैदिक, वेदान्तर्गत हो वा वेदबाह्य अथवा वेदविरुद्ध यस प्रश्नमा विद्वान्हरूको अलिकति मत बाझदछ । तन्त्रलाई अवैदिक वा वेदवाह्य मान्नेहरू तन्त्रले वामाचारको वर्णन गर्दछ, त्यहाँ कौलाचार पनि छ, पञ्चमकारको प्रयोगको उपदेश त्यहाँ गरिन्छ, त्यसकारण त्यो अशुद्ध मार्ग हो, वेदबाह्य हो, वेदविरुद्ध हो, अवैदिक हो । तर यसको उत्तर तन्त्रचिन्तामणिकारले नै उद्धृत गरेका वचनबाट पर्याप्त भइसकेको छ ।

तन्त्र वा आगम भनौं वेदको सार वचन लिएर शङ्करले उपदेश गरेकोले यो अवैदिक वा वेदबाह्य चाहिं हुँदै होइन, बरु वेदभन्दा पनि अधिक चाहिं अवश्य हो । यसमा थुप्रै प्रमाण, तर्क र निदर्शनहरू यत्र तत्र पाइन्छन् । तीमध्ये केहीलाई संक्षेपमा यसरी लिन सकिन्छ-

क. तन्त्रमा उपदिष्ट ज्ञान र चर्या दुवै अथर्ववेदका संहिताहरूमा पाइने कुरा तन्त्रका अनेकौं वचनहरूमा स्पष्टरूपमा बताइएका छन् ।

ख. बदोक्त अनेकौ सूक्तहरू र उपनिषदहरू तान्त्रिक देवतासँग संबद्ध छन् र यी सबै उपासनाका अङ्ग मानिएका छन् ।

ग. अथर्ववेद मन्त्र होइन, आधुनिक गवेषकहरूले पनि सबभन्दा पुरानो मानेको ऋग्वेदमा पनि पाइने शक्तिउपासनाको उपदेशलाई तन्त्रोपासना पद्धतिले आत्मसात् गरेको छ ।

घ. श्रुत्युक्त महावाक्यहरूको क्रियात्मक अनुभव तान्त्रिक उपासनाको लक्ष्य भएकोले वेद-वेदाङ्गप्रतिपादित विधिसित तन्त्रोपासना विधि त्यति प्रतिकूल छैन ।

ङ. तन्त्रानुसार उपास्य देवतालाई "वेद-वेदान्तवेद्या" भनिएको छ, तन्त्रपूजाको लक्ष्य र वेदोक्त शास्त्रको लक्ष्य वास्तवमा फरक छैन । देवतालाई "त्वमेका परब्रह्मरूपेण सिद्धा" भनेर स्तुति गरिएको उदाहरण पाइन्छ । उपासनाका मन्त्रहरूमा उपास्य र उपासकको अभेद भावना गरिएको वलियो निदर्शन पनि नपाइने होइन । तान्त्रिक उपासनामा १. ओम् तत्सत्, २. सा.(सः) अहमस्मि, ३. ब्रह्माहमस्मि ४. सर्वं खल्विदं ब्रह्म ५. तत्सदहमेव, ६. ब्रह्मैवाहमिदं सर्वम् । यी महावाक्यहरूले षडङ्गन्यास आदि गरिन्छ ।

एकैवाहमियं द्वितीयरहिता न स्त्री न चाहं पुमान् ।
न क्लीबं न शरीरिणी विधिमुखो मायाप्रपञ्चोऽखिलः ॥
मायातीततया निराकृतगुणग्रामाऽनुपाधिः स्वतः ।
सर्वज्ञाऽस्म्यहमक्रिया घनतराऽऽनन्दोदधिः सच्चितोः॥
विश्वस्यापि निजप्रकाशमहसश्चैक्येन नित्योदिता ।
भासन्तेऽखिलशक्तयो मम कला मय्यैव भावं गताः ॥
मद्रूपः परतः शिवोऽपि तदहं यद् ब्रह्मरूपं परम् ।
तद्रूपा तदुपासिता किल तदन्तर्यामिरूपं महः ॥

यी महावाक्यहरूको भावना उपास्यदेवताको स्वरूपानुसन्धानमा सहयोगी हुन्छ । अनि उपास्य देवताको निर्वाण, महानिर्वाण, निर्वाणातीत, तूर्य, तूर्यातीत स्वरूपको साधना गरिन्छ ।

"त्वमेका घटब्रह्मरूपेण सिद्धा..... अहं देवी न चान्योऽस्मि ब्रह्मैवाहं न शोकभाक् । ......... सच्चिदानन्दरूपोऽहमात्माऽहमिति चिन्तये ॥"
इत्यादि वाक्यहरूको भावना गरिन्छ ।

यसरी **"देवो भूत्वा देवं यजेत्"** आदिको निदर्शनलाई तन्त्रको वेदात्मकता सिद्ध गर्ने प्रमाणका रूपमा लिन सकिन्छ ।

च. पञ्चमकारलाई वीरोपासनाको महोपचारमा अवश्य गणना गरिन्छ तर तिनको अधिकारी-विवेचन गरेर मात्र साक्षात् प्रयोग गर्ने वा अनुकल्पको प्रयोग गर्ने निश्चय गर्न सकिन्छ । फेरि पञ्चमकारको शोधन नगरी प्रयोग गर्नु हुँदैन, तर शोधन चाहिं वेदमन्त्रहरूबाटै हुन्छ ।

छ. वेदविहितयागहरूमा पनि पशुना यजेत, श्येनेनाभिचरन् यजेत, आलभेत इत्यादि विधिवाक्यहरूले हिंसादि र सोमादिपान, हयमेध, गोमेधयाग आदि अनभीप्सित कर्म नगरिने होइन, यसबाट मात्र कुनै विधि वा शास्त्र हेय वा त्याज्य होइन भन्ने पनि एउटा तर्क हो ।

ज. वेदोक्त सावित्रीग्रहण तान्त्रिकतासँग अनुकूल छ ।

झ. श्रीमद्भागवत महापुराण, पद्मपुराण आदिमा वैदिक र तान्त्रिक दीक्षा, मख, अर्चनाको प्राशस्त्य वर्णन छ ।

ज. तन्त्रोक्त देवताको उपासना संबद्ध तत्तद्देवताका गायत्रीहरू र अन्य मन्त्रमा पनि ॐकारको समावेश हुनु वेदविरुद्ध होइन । इत्यादि ।

## तन्त्रको वेदाधिकता

वैदिक कर्मकाण्डको मार्ग कर्तव्याकर्तव्यको विवेकजन्य दुरूहताले व्याप्त छ । त्यहाँ जातिच्युत हुने, पतित हुने संभावना अधिक छन् । स्त्रीशूद्रादिको अधिकारहीनता त्यहाँ निर्दिष्ट छ । वेदमार्गमा अधिकार नभएका, वेदभ्रष्ट, मुमुक्षु अथवा भक्तको पनि कल्याणको मार्ग आगम वा तन्त्रले प्रशस्त पार्दछ । त्यसको अर्थ वेदको महत्त्व कम गर्न वा वेदमार्गको परित्याग कदापि होइन, तन्त्रदीक्षा त्रैवर्णिकले सावित्रीप्राप्त गरिसकेपछि मात्र लिने र सावित्रीजपपछि मात्र तान्त्रिक उपासना गर्ने

तन्त्रको निर्देशले वेदमार्गको जहिले पनि सम्मान गरेको छ । जस्तै श्रीमद्भागवतको वचन -

**वैदिकी तान्त्रिकी दीक्षा मदीयव्रतधारणम् ।**

**वैदिकस्तान्त्रिको मिश्र इति मे त्रिविधो मखः ॥**

पद्मपुराणको उक्ति -

**वैदिकस्तान्त्रिको मिश्रः श्रीविष्णोस्त्रिविधो मखः ।**

**त्रयाणामीप्सितेनैव विधिना हरिमर्चयेत् ॥**

कुलार्णवतन्त्रको वचन -

**तस्मात् वेदात्मकं शास्त्रं विद्धि कौलागमं प्रिये ।**

मनुस्मतिको उक्ति -

**अथातो धर्मं व्याख्यास्यामः, श्रुतिप्रमाणको धर्मः।**

**श्रुतिश्च द्विविधा- वैदिकी तान्त्रिकी च ॥**

यो आदिलाई आधार मानेर -

**"परमार्थतस्तु तन्त्राणां स्मृतित्वाविशेषेऽपि मन्वादिस्मृतीनां कर्मकाण्डशेषत्वं तन्त्राणांब्रह्म काण्डशेषत्वमिति सिद्धान्तात्"** भनेर ललितासहस्रनामको सौभाग्यभास्करमा तन्त्र शास्त्रको धर्मशास्त्रमा अन्तर्भाव मान्ने भास्करराय जस्तो विद्वान्को निष्कर्षले वेद, वेदाङ्ग जत्तिकै तन्त्रलाई पनि प्रमाण मान्नु अत्यन्त उचित र युक्तियुक्त हुन्छ ।

## आगम वा तन्त्रको आविर्भाव

आगम वा तन्त्रशास्त्रलाई भैरवागम -

**परमेशमुखोद्गीर्णमुत्तमं परमं मतम्"** । भनेर शिवबाट उत्पन्न मान्दछ ।

**अदृष्टविग्रहाच्छान्ताच्छिवात्परमकारणात् ।**

**ध्वनिरूपं विनिष्क्रान्तं शास्त्रं परमदुर्लभम् ।**

अदृष्ट विग्रह भएका शान्त शिव नै कारणका पनि कारण हुन्, तिनैबाट विविध शास्त्रहरूको आविर्भाव भएको हो ।

आगमको उत्पत्तिका प्रसङ्गमा तन्त्रचिन्तामणिकार शिवको शब्द स्वयं उद्धृत गर्दछन् ।

**"तस्मादागमकर्ताऽहं वेदकर्ता पितामहः।"**

आगमको कर्ता म (शिव) हुँ र वेदका कर्ता पितामह (ब्रह्मा) हुन् ।

योगिनीहृदयको टीकामा अमृतानन्दयोगी महास्वच्छन्दको उद्धरण दिँदै भन्दछन्-

**गुरुः शिष्यपदे स्थित्वा स्वयं देवः सदाशिवः ।**
**प्रश्नोत्तरपदैर्वाक्यैस्तन्त्रं समवतारयत् ॥**

स्वयं ज्ञानैकविग्रह सदाशिवले स्वयंलाई प्रकाश र विमर्श अर्थात् शिव र शक्ति अर्थात् गुरु र शिष्यको रूपमा राखेर गुरुभावले उपदेश दिई शिष्यभावले ग्रहण गरी समस्त तन्त्रशास्त्रको अवतरण गराउनुभएको हो । आगमहरूको अवतरणका सम्बन्धमा गोपीनाथ कविराजले आफ्नो लेख संग्रह "तान्त्रिक वाङ्मय में शाक्तदृष्टि" भन्ने पुस्तकमा "तन्त्रका स्वरूप, आविर्भाव और भेद" शीर्षकको लेखमा ज्यादै राम्ररी विस्तारमा विचार गरेको देखिन्छ । योगिनीहृदयको टीका दीपिकामा अमृतानन्दनाथ योगीले तन्त्रको अवतरणका सम्बन्धमा व्यक्त गरेको विचारलाई कविराजले पनि महत्त्वपूर्ण मानेका छन् ।

भगवान् परमशिव प्रकाशमूर्ति महाप्रकाशस्वरूप हुनाले लोकमा प्रकाश प्रदान गर्ने सूर्य, चन्द्र, अग्नि पनि उनकै प्रकाशले स्वयं प्रकाशित भएर जगत्लाई प्रकाश प्रदान गर्दछन्, तर शिवलाई प्रकाशित गर्ने अर्को कुनै प्रकाश छँदै छैन ।

**न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः । तमेव भान्तमअनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥**

यस्ता प्रकाशस्वरूप परमशिव शिवमाथि नै अनुग्रह राखेर आफ्नै विमर्शांश (शक्ति अंशले) प्रश्न सोधी, प्रकाश अंशले (शिव अंश) ले उत्तर दिएर परा, पश्यन्ती, मध्यमा र वैखरीका क्रमले आगमशास्त्रको अवरण

गराउँदछन् । ज्ञानको अवतरणक्रमका सम्बन्धमा डा. गोपीनाथ कविराजको पूर्व चर्चित लेख "तन्त्रका स्वरूप, आविर्भाव और भेद" मा कविराजले तन्त्रको सारसंक्षेप दिँदै विषयलाई स्पष्ट पारेका छन् ।

परावाक् सबैको मूल हो । यो बोध स्वरूप छ । यो पूर्ण स्थिति हो । अनन्तशास्त्र परम बोधरूपमा परावाक्मा विद्यमान रहन्छन् । सृष्टिको उन्मेषमा परावाक्मा रहेका शास्त्र अवतरित हुन्छन् । सबभन्दा पहिले परम बोधबाट अहं ज्ञानको उदय अन्तर्हृदयमा हुन्छ । यस स्थितिमा परम बोध स्फुट हुँदैन । यहाँ वाच्य र वाचक स्वभाव पनि रहँदैन यो पश्यन्ती भूमि हो । त्यसपछि आउँदछ- मध्यमा भूमि । यहाँ वाच्यार्थ वाच्य-वाचक स्वभाव लिएर उल्लसित हुन्छ । यसै मध्यमा भूमिमा परमेश्वर अफ्नो स्वरूपलाई दुई अंशमा विभक्त गरेर स्वयं गुरु र शिष्यको रूप ग्रहण गर्दछन् । यही कल्पित गुरुशिष्यभावबाट गुप्त ज्ञान प्रकट हुन्छ । तर यो पनि अस्फुट रहन्छ । त्यसपछि वैखरी भूमिमा आएर यही वाणी शास्त्रको आकार ग्रहण गर्दछ । यही आगमको उद्भव वा अवतरणको प्रक्रिया हो ।

परमेश्वरको स्वरूप त वास्तवमा एउटै छ, तर उनका अभिन्न शक्तिहरूका सम्वन्धभेदले गर्दा त्यसमा अनेकता अथवा भेदको उपचार हुन्छ र उनैमा भेद, भेदाभेद र अभेद अवस्थाहरू प्रकट हुन्छन् । शिव स्वयं आफ्ना पाँच शक्तिहरू चित्, आनन्द, इच्छा, ज्ञान र क्रियालाई आफ्ना पाँच मुख ईशान, तत्पुरुष, सद्योजात, वामदेव र अघोरका रूपमा प्रकट गर्दछन् । यिनीहरूबाटै प्रत्येकबाट बेग्लाबेग्लै र परस्परको संघटनबाट पनि आगमहरूको अवतरण हुन्छ । ज्ञानको सत्ता भेद, भेदाभेद र अभेद तीन प्रकारको भएको हुनाले शास्त्र पनि त्यसैगरी भेद, भेदाभेद र अभेद प्रधान गरी तीन प्रकारकै हुन्छन् ।

शिवबाट भेदप्रधान दश शैवागम, भेदाभेदप्रधान अठार भैरवागम र अभेदप्रधान चौंसठ्ठी तन्त्रहरूको आविर्भाव हुन्छ ।

आगमहरूको उत्पत्तिलाई लिएर तन्त्रचिन्तामणिकारको प्रतिपादन अलि अर्कै छ । ब्रह्मा साढे आठ वर्षका हुँदा तन्त्रविद्याका प्रभावले अत्यन्त अहंकारी हुन्छन् र आचार अनाचारको विवेक नगरिकन जथाभावी गर्न थाल्दछन् । त्यसबेला शिवले स्वयं बटुकरूप लिएर पितामहसँग धर्मको मार्गको विषयमा प्रश्न गर्दछन् । ब्रह्माले आफ्नै माथिल्लो मुखबाट आगमको उत्पत्ति भएको र यही भोग र मोक्षको मार्गको हो भनेर वृथा अहंकार गर्दछन् । उनको भ्रूटो अभिव्यक्तिले गर्दा शिव रिसाएर आफ्ना नङ्का टुप्पाले ब्रह्माको माथिल्लो शिर छेदन गर्दछन् र पाँचौ वेदको लय शिवमा नै हुन्छ । यसकारण पुन: शिवबाट प्रकट भएकाले शिव नै आगमका कर्ता हुन्, वेदकर्ता मात्र पितामह हुन् ।

शास्त्रको उत्पत्तिलाई लिएर भिन्न-भिन्न अभिव्यक्तिहरू पनि नपाइने होइनन् । कहीं-कहीं त निगमबाट आगम जन्म्यो, आगमबाट यामल र वेदहरूको उत्पत्ति भयो भनि भनिएको छ । तर यी सबै तन्त्रशास्त्रका वैशिष्ट्यबोधक अर्थवाद हुन् भन्नुपर्दछ ।

## आगम वा तन्त्रको संख्या

आगम वा तन्त्रहरूको संख्याको विषयमा माथि पनि केही चर्चा भइ सकेको छ । परमेश्वरको शान्त शरीरका पाँच मुखहरूबाट दशवटा द्वैत, शैवागम, अठारवटा द्वैताद्वैत भैरवागम र चौसठ्ठी अद्वैत तन्त्रहरूको आविर्भाव भएको हो । उनका नाममा अनेकौ मत मतान्तर छन् ।[२] मूल तन्त्रका नाममा पनि फरक फरक मत छन् उपतन्त्रहरू त अनेकौं छन् ।

तन्त्रचिन्तामणिकारले “पचास पद्म आगम ग्रन्थहरू छन्, ती मध्ये छब्बीस पद्म संसारमा, चौध पद्म स्वर्गमा र दश पद्म पातालमा छन्” भनेका छन् । यो विषय त एउटा छुट्टै अनुसन्धेय विषय हो । तर ती सबै मन्त्र फरक छन् । एउटा अनुष्टुप् छन्दको श्लोकमा बत्तीस अक्षर हुन्छन् र त्यो एउटा ग्रन्थ हुन्छ । एक तन्त्रमा लाखौं ग्रन्थ पनि हुन सक्छन् । कति

---

[२] तन्त्रका नामका सम्बन्धमा श्री गोपीनाथ कविराजको तान्त्रिक साहित्य, श्री व्रजबल्लभ द्विवेदीको नित्यांपोडशिकार्णवका भूमिकाहरूमा स्पष्ट रूपमा विवेचना गरिएको छ ।

लुप्त भए कालक्रमले कति विद्यमान छन् अझै । त्यस हिसाबले पनि अत्यन्त धेरै छन् भन्ने अभिप्रायले त्यो अभिव्यक्ति ग्रन्थकारको हुन सक्तछ ।

## आगमको वैशिष्ट्य

तन्त्र चिन्तामणिकारले ज्यादै संक्षिप्तरूपमा तन्त्रको वैशिष्ट्य पर्याप्त हुने गरी प्रतिपादन गरेका छन् । आगममा सम्पूर्ण शास्त्रहरू सम्पूर्ण देवताहरू, समस्त पुण्य, समस्त विद्या विद्यमान छन् । कति भन्नु आगममा नपाईने कुरा केही छैन । वास्तवमा आगमोक्त मार्ग सर्वश्रेष्ठ छ । रुद्रयामल भन्छ-

**कृते श्रुत्युक्तमार्गः स्यात् त्रेतायां स्मृतिभाषितः ।**
**द्वापरे वै पुराणोक्तः कलावागमसम्भवः ॥**

सत्य युगमा वेदमार्ग, त्रेतामा स्मृति (धर्मशास्त्र) मा बताइएको बाटो, द्वापरमा पुराणले निर्देश गरेको मार्ग र कलिमा आगमले बताएको मार्ग श्रेष्ठ छ । यस भनाइमा ज्यादै ठूलो वास्तविकता छ । वेद, धर्मशास्त्र, पुराणहरूको मार्ग, उनीहरूले निर्देश गरेका क्रियाकलाप यथावत् संकोच नगरिकन अवलम्बन गर्न आजको युगमा सम्भव छैन । फेरि वेदादिले त्रैवर्णिक (ब्राह्मण, क्षत्रिय, वैश्यहरू) लाई र शूद्रलाई प्रदान गरेको धार्मिक अधिकारमा पनि भेदभाव छ । यसै कारण आजभोलि धार्मिक कर्मकाण्ड प्रति प्रतिकूल प्रश्नहरू उठ्न र त्यतापट्टि अवज्ञा हुन थालेको छ । त्यसको समाधान आगमबाट मात्र हुन सक्छ । यो मार्ग सबैका लागि हो ।

हुन त अधिकारी - विवेचन यहाँ पनि छ, तैपनि यो विवेचन सामर्थ्यको दृष्टिले मात्र हो, सिद्धि नै नहुने चाहिं होइन । तर लक्ष्य चाहिं आगमोक्त मार्गको पनि सात्विक भोग र अन्तमा निःश्रेयस नै हो । आगमहरूमा पशु-आचार, वीराचार, वामाचार र कुलाचारबाट दिव्यभावमा पुगेर वेदोक्त महावाक्यहरूले बताएको लक्ष्य-मोक्ष प्राप्त गर्ने विशिष्ट उपाय छ । यसैले यो पञ्चम वेद मानिएको पनि हो । युग सुहाउंदो पनि छ । यहाँ भेदभाव पनि छैन । अलिकति भएको रोकतोक

चाहिं दुरुपयोग भएर स्वयं र अरूलाई पनि कष्टप्रद परिणाम न आओस् भनेर हो । त्यसैले यतापट्टि प्रवृत्ति निरस्त हुन पाएको छैन । तर बाटो लाग्न भन्दा पहिले बाटोको पूर्ण ज्ञान र हिंड्ने सामर्थ्य एवं आचरणमा इमान्दारी जहाँ पनि लक्ष्य प्राप्त गर्न आवश्यक हुन्छन्, सहकारी हुन्छन् । आगममा पनि त्यो चाहिं अवश्य छ ।

## सृष्टि

सृष्टिप्रक्रियाको उल्लेख अरू तन्त्रहरूमा जस्तै तन्त्रचिन्तामणिकारले पनि पहिलें नै गरेका छन् । उनले चर्चा गरेको वैन्दव सृष्टि ग्रन्थमा प्रतीक रूपमा कथात्मक भएर व्यक्त भएको छ ।

विश्वका सम्पूर्ण भिन्नताहरू सर्वप्रथम शक्तितत्वमा समरसाकार भएर बिन्दुरूपमा समाहित थिए । समस्त भेदहरूलाई बीजरूपमा आफ्नो गर्भमा समाहित गरेको त्यही व्यापक बिन्दुबाट समस्त मातृकाहरू, वर्ण र जातिहरू, मन्त्र र देवताहरू विश्वकल्याणका लागि आविर्भूत भए । त्यही आविर्भावलाई लौकिकरूपमा जन्मियो भन्न लागियो । अतः त्यही बिन्दु सृष्टिको आदिमा स्रोत वा मूल थियो जो महाबिन्दु हो ।

यसै बिन्दुबाट नाद भयो र त्यसबाट शक्ति । त्यसै नादबाट अर्द्धबिन्दु उत्पन्न भयो । त्रिबिन्दुमय शक्ति र अर्द्धबिन्दुको समष्टिरूप सार्धत्रिवलयाकार कुण्डली महाशक्तिकारूपमा सम्पूर्ण प्राणीका शरीरमा विराजमान छिन् । तिनै कुण्डलिनी स्वेच्छावशात् त्रिगुणित चतुर्गुणित हुँदै जांदा विविध मन्त्रेश्वरीहरू विद्याहरू आविर्भूत हुँदै गए । अनन्त मन्त्र, अनन्त देवता, अनन्त मन्त्रेश्वरीहरू, अनन्त विद्या लोकमा प्रतिष्ठित हुँदै गए । यो थियो विद्याहरूको आविर्भावप्रक्रिया ।

यस्तै फेरि मूलतत्त्व, ब्रह्मतत्त्व, शिव-शक्तिमय, काल-कालीमय त्यसैको दुई स्वभावविशेष - निर्गुण र सगुण । निर्गुण - मन, वचनले वर्णनै गर्न नसकिने, । सगुण - वर्णनीय, वाच्य - वर्णन गर्न सकिने, वाक् शक्तिद्वारा यन्त्रित । त्यहाँ शक्तिको प्रधानता, त्यही शक्ति कोषमा अनन्त ब्रह्माण्ड, चराचर जगत्, बीजरूपले सूक्ष्म अत्यन्त सूक्ष्म भएर रहेको

थियो । त्यही शक्तिविशेष आफ्नै स्वतन्त्र इच्छावशात् गुणित भएर वर्णका रूपमा प्रकट भयो । त्यसैबाट ब्रह्माण्डगोल, ब्रह्मगोल, विष्णुगोल, रुद्रगोल, लोकेशगोल, देवगोल, अनि ऋषिगोल, त्यसपछि करौडौं गोलपिण्डहरूको उत्पत्ति-आविर्भाव भयो, हुँदै गयो ।

फेरि मूलतत्त्व परब्रह्मतत्त्व हो । तिनैको प्रतिबिम्ब महाप्रकृति, तिनैबाट महत्तत्व (बुद्धि) को प्रादुर्भाव भयो । त्यसबाट अहंकार, अहंकारवाट आकाश, आकाशबाट वायु, वायुबाट अग्नि, अग्निबाट जल, जलवाट पृथ्वी, पृथ्वीबाट समस्त औषधिहरू, औषधिबाट अन्न, अन्नबाट प्राण, प्राणबाट जीवहरूको प्रादुर्भाव भयो । यस प्रकार सम्पूर्ण चराचर जगत् ब्रह्मैवाट प्रादुर्भूत भएर पनि ब्रह्ममै अधिष्ठित, ब्रह्मस्वरूप, ब्रह्मैबाट अभिन्न र ब्रह्मकै प्रतिबिम्ब मात्र हो ।

वास्तवमा शिव व्यापक, सूक्ष्म, सदानन्द, निरामय, विकाररहित, सनातन ज्ञान र ज्ञेय दुवै हुन् । उनकै आफ्नै आफूबाट अभिन्न पराशक्ति शिवतत्त्वबाट उनको आफ्नै इच्छावशात् परिस्फुटित भएर सृष्टिकालमा तिलवाट तेल निस्के सरि प्रस्फुटित हुन्छिन् । तिनै अखण्ड पर चित् शक्ति स्वयं चित्रूपिणी समस्त विवर्तहरूमा समन्वित भएर विन्दुभावमा परिणत हुन्छिन् । त्यही विन्दु परबिन्दुबाट शब्दब्रह्मको प्रादुर्भाव भयो । त्यही कुण्डलीरूपमा प्राणीहरूको शरीरमा रहेर वर्णस्वरूपमा आविर्भूत भयो । अनन्त गद्य पद्यहरू वने, बन्दै गए । त्यसैले मूलतत्त्व शिव पराहन्ता चिद्रूप प्रकाश हुन् र उनैको उनीबाट अभिन्न शक्तिविमर्श र यो समस्त ब्रह्माण्ड विमर्शकै स्वरूप हो । यही सृष्टिविश्लेषणको संक्षिप्त रूप हो ।

## विद्याहरूको प्रादुर्भाव

शब्दब्रह्म नै बिन्दु, बिन्दुबाट नाद, नादबाट सार्धत्रिवलयाकार शक्ति, शक्तिबाट वर्ण अनि मन्त्रको आविर्भावको विशेष प्रक्रिया देखेपछि प्रत्येक मन्त्र शक्तिरूप अझ ब्रह्मरूप हो भन्ने कुरामा शंका हुँदैन । विद्या भन्नु र मन्त्र भन्नु एउटै तत्व हो । विद्या र देवता पनि भिन्न तत्व होइनन् । लोक कल्याणका लागि उपासनामा सुविधा होस् भनेर नाम र

रूपले विहीन ब्रह्मको नाम रूप कल्पना गरेर विद्या र देवताको स्वरूप कल्पना गरिन्छ र यही उपासनाको प्रमुख माध्यम बन्दछ ।

गाईको शरीरका विद्यमान दूधमा रहेको घ्यू गाईको शरीरमा रहुञ्जेल शरीरको पुष्टिकारक हुँदैन । उपासना विना देवतासान्निध्यरूप फल प्राप्त हुँदैन । उपासनाका निमित्त विद्या र देवताको कल्पना हुन्छ । त्यही देवतासंग आत्मको ऐक्य स्थापना गरे उपासक ब्रह्मभावमा प्राप्त हुन्छ ।

महामायाका दुई स्वरूप विद्यमान छन् - सगुण र निर्गुण । मायायुक्त सगुण र माया-विहीन निर्गुण । त्यही निर्गुणतत्व साधकका हितको निमित्त, भक्तलाई मोक्ष प्रदान गर्नका लागि उपासना-सौविध्यका निमित्त सगुणका रूपमा अवतरित हुन्छ । एकबाट अनेक हुन्छ, अभिन्नबाट भिन्न हुन्छ, तैपनि वास्तवमा एउटै अभिन्न नै रहन्छ ।

लौकिकदृष्टि र परमार्थदृष्टि दुई दृष्टि छन् । लौकिक दृष्टिले लोकमा समस्त उपासना चल्दछन् । तर लक्ष्य परमार्थ प्राप्त गराउनु नै हो । समस्त आगम र तन्त्रहरूको वास्तविक लक्ष्य परमार्थप्राप्ति हो । भोग पनि हो, मोक्ष पनि । अभ्युदय पनि हो निश्रेयस पनि । परम लक्ष्य चाहिं निश्रेयस नै हो । यसैले तन्त्र मार्ग धर्ममार्ग हो ।

त्यही लौकिक दृष्टिले हेर्दा विद्या तीन प्रकारका छन् - महाविद्या, सिद्ध विद्या र विद्या । विद्या वस्तुतः एउटै हो, तैपनि उपासकका कामनाभेदले, देवताभेद र विद्याभेद हुन्छन् । यो भेद तात्त्विक भेद नभई औपचारिक भेद हो । भेद अनेक भएतापनि महाविद्याहरूको दश वटा भेद चाहिं सर्वसम्मत छ । काली, तारा, षोडशी, भुवनेश्वरी, भैरवी, छिन्नमस्ता, धूमावती, बगला, मातङ्गी र कमला ।

यी महाविद्याहरू पनि युग भेदले गर्दा कहिले कुनै सिद्धविद्या कुनै महाविद्या र कुनै विद्याका रूपमा प्रतिष्ठित र उपास्य हुन्छन् । तन्त्रचिन्तामणिकारले यो भेद राम्ररी बताएका छन् ।

| | सिद्धविद्या | महाविद्या | विद्या |
|---|---|---|---|
| **सत्ययुग-** | काली, श्रीविद्या, भैरवी | वगला, छिन्ना, कमला, भुवनेशी । | मातङ्गी, मातङ्गी । |
| **त्रेतायुग-** | काली, तारा, सुन्दरी । | मातङ्गी, भुवना, लक्ष्मी । | धूमावती, भैरवी । |
| **द्वापरयुग-** | काली, तारा, भैरवी छिन्ना । | सुन्दरी, भुवना, रमा, धूमावती । | मातङ्गी, कमला । |
| **कलियुग-** | काली, तारा, छिन्ना । | सुन्दरी, भैरवी, लक्ष्मी, मातङ्गी, भुवना । | धूमा, बगला । |

यी मात्र होइनन् अन्य विद्या र उपविद्याहरू पनि युगभेदले गर्दा सिद्ध विद्या, महाविद्या र विद्याका रूपमा उपास्य हुन सक्ने वर्णन तन्त्रान्तरमा गरिएको पाइन्छ । तैपनि कलिमा भने कालीको माहात्म्य – **"कलौ काली तु केवला"** भनेर अतिशयरूपमा वर्णन गरिएकाले कलिमा कालीको उपासना अनन्त सिद्धिदायक हुन्छ ।

## भैरव

महाविद्याहरूका आ-आफ्ना भैरवहरू पनि हुन् । यी भैरवहरू विद्याका शिव हुन् । शिव र शक्ति, यी दुईवटा देखिएता पनि एउटै तत्व हुन्, तर दुईवटा पनि हुन् । शिव नभइ शक्तिको कला आधारहीन हुन्छ, शक्ति न भए शिवको नाम र धाम नै हुँदैन । बीजबाट अंकुर र अंकुरबाट बीज भए झैं शिवशक्त्यात्मक महाप्रकाश नै विश्वभेदका सर्जक र स्रोत हुन् । त्यसै कारण विद्याको उपासना शिव वा भैरव विना हुन सम्भव छैन ।

**भैरवहरू -**

१. कालीका भैरव महाकाल हुन्, यिनको उपासना कालीको दाहिने भागमा हुन्छ ।

२. ताराका भैरव हुन् अक्षोभ्य । तारिणी यिनैका साथ रमण गर्दछिन् ।

३. त्रिपुराका भैरव राजेश हुन् भनेर तन्त्र-चिन्तामणिकार लेख्दछन् । तर तन्त्रान्तरमा श्रीविद्याका भैरव ललितेश्वर वा शिव हुन भन्ने उल्लेख पनि पाइन्छ ।

४. भुवनेश्वरीका भैरव महेश्वर हुन् भन्ने तन्त्रचिन्तामणिकारको भनाइ देखिन्छ । तर तन्त्रान्तरमा भुवनेश्वरीका भैरव त्र्यम्बक वा महादेव भन्ने नामोल्लेख पाइन्छ ।

५. भैरवीको भैरव तन्त्रचिन्तामणिकारले उल्लेख गरेका छैनन् तर अन्य तन्त्रले दक्षिणामूर्ति वा वटुक भैरवीका भैरव हुन् भन्ने उल्लेख गरेको पाइन्छ ।

६. छिन्नमस्ताका भैरव कराल हुन् भन्ने चिन्तामणिकारको उल्लेख छ । तर तन्त्रान्तरले छिन्नाका भैरव कबन्ध वा क्रोध भैरवको नाम उल्लेख गरेको पाइन्छ ।

७. धूमावतीलाई विधवाका रूपमा उपासना गरिन्छ । विधवाका भैरव हुन सक्तैनन् । तर यिनका पनि भैरव तन्त्रचिन्तामणिकारले अघोर हुन् भनी लेखेको र अन्य तन्त्रले कालभैरव भन्ने लेखेको देखिन्छ ।

८. वगलाका भैरव तन्त्रचिन्तामणिकारले त्र्यम्बक र अन्य तन्त्रहरूले एकवक्त्र (महारुद्र) अथवा मुत्युञ्जय भन्ने उल्लेख गरेका छन् ।

९. मातङ्गीका भैरव महेश हुन् भन्ने तन्त्रचिन्तामणिकार उल्लेख गर्दछन् । तर अन्य तन्त्रले मतङ्ग हुन्, यिनै दक्षिणामूर्तिस्वरूप हुन भन्ने लेखेका छन् ।

१०. कमला (लक्ष्मी) का भैरव नारायण हुन् भन्ने उल्लेख चाहिं सबैको एउटै छ ।

एउटै विद्याका भैरवका विभिन्न नामहरूबाट उपासकहरूले अन्यौल चाहिं मान्नु पर्ने आवश्यकता छैन । आ-आफ्नो परम्परागत रूपमा गुरुबाट पाएको दीक्षामन्त्रका साथ निर्दिष्ट विद्या र भैरवको नाम नै उपास्य देवताको नाम हुन्छ, यसमा विवाद छैन । जहाँ विवाद हुन्छ त्यहाँ गुरु नै अन्तिम निर्णायक मानिन्छन् ।

महाविद्याहरूमा पनि विशेषत: कलियुगमा त झन् कालीको महत्त्व ज्यादै ठूलो छ । कालीलाई विद्याराज्ञी (विद्याहरू मध्ये सर्वश्रेष्ठ रानी विद्या) मानिएको छ । तन्त्रचिन्तामणिकारले कालीको आद्या विद्याको रूपमा सर्वश्रेष्ठता प्रतिपादन गरेका छन् । काली नै सिद्धिदायिका र मोक्षप्रदा विद्या हुन् । कालीवाटै सम्पूर्ण विद्या र सम्पूर्ण जगत्को उत्पत्ति, स्थिति र संहार तिरोभाव एवं अनुग्रह हुन्छ । त्यसैले कलिका सम्पूर्ण दोषप्रशमन गर्ने हुनाले काललाई पनि नियमन गर्ने हुनाले, स्वयं कालको अधीनमा नरहने हुनाले अनादि शक्ति भगवती कालिकाका रूपमा उपास्य बनेकी हुन् भन्ने शास्त्रको मत छ ।

तन्त्रचिन्तामणिकारले ग्रन्थको द्वितीय प्रकाशमा दश महाविद्याहरूको मन्त्रोद्धार गरेका छन् । तन्त्रशास्त्रमा मन्त्रोद्धारलाई ज्यादै गोप्य-अप्रकाश्य मानिएको छ । यसैले बीजाक्षरलाई यथावत् नराखी प्रतीक अक्षरहरू निर्दिष्ट गरिएका हुन्छन् । तन्त्रोक्त विधिले गुरुबाट दीक्षा प्राप्त गरेर गुरुमुखवाट मन्त्रोद्धार हुनु योग्य मानिन्छ ।

त्यसैले यसलाई गुरु-शिष्यकै बीचमा अन्तरक्रियाका लागि छाडी अन्य कुरा तर्फ जानु उपयुक्त हुन्छ ।

## उपासनाका तीन भेद

१. सात्त्विक उपासना - यसमा मानस जप, पूजा आदिलाई मुख्य मानिन्छ ।

२. राजस उपासना - यसमा प्रतिमापूजन हुन्छ । प्रतिमाको पूजनका लागि विविध बाह्य उपचारहरूको प्रयोग हुन्छ । यो दक्षिण मार्ग हो ।

३. तामस उपासना - यसमा विविध पीठहरूमा बलिदान आदि दिएर पञ्च मकारको प्रत्यक्ष प्रयोग गरेर अर्चना गरिन्छ । यो वाम मार्ग हो ।

## उपासनाका अन्य दुई भेद -

१. सकाम - यो सांसारिक विषयवस्तुहरूको प्राप्तिका निमित्त गरिने उपासना हो ।

२. निष्काम - यो मोक्षको कामनाले गरिने उपासना हो ।

उपासनाका दुई मार्ग छन् तापनि दक्षिण मार्ग भन्दा वाम मार्ग श्रेष्ठतर छ । वाम मार्ग रहस्यात्मक छ । यसको रहस्य बुझेर मात्र यस मार्गमा लाग्नु उचित हुन्छ । जसले यो बुझ्दछ, त्यो उपासक पनि श्रेष्ठ हुन्छ । यसको रहस्य पूर्णतया बुझ्ने स्वयं शिव मात्र हुन सक्तछन् । पछिका ऋषि मुनिले, गुरुजनले सबैले सबै बुझेनन् केही अंश बुझे । जसले बुझ्यो, त्यसले मुक्ति पायो । जसले बुझेन् त्यो भवबन्धनमा पऱ्यो । स्वयं श्रीकृष्ण वाममार्गका ज्ञाता थिए । उनले अर्जुनलाई यसको उपदेश गरेका थिए । स्वयं, इन्द्र, वशिष्ठ, नाथ गुरुहरूले पनि यसको रहस्य केही बुझेका थिए ।

देवताहरूमा पनि कुनै दक्षिण र कुनै वाम मार्ग उपासना गर्नाले चाडै प्रसन्न हुने र सिद्धिप्रदान गर्ने हुन्छन् । आम्नायका भेदले पनि आचार र मार्ग फरक पर्दछन् । वाममार्गमा पनि पञ्च मकारको प्रयोग हुन्छ भनेर मात्र पुग्दैन त्यसमा पनि कुनै देवतालाई कुनै मकारको प्रयोग हुने वा नहुने पनि हुन्छ । त्यसैले कुन आम्नायको देवता हो, त्यो विचार गरी तिनलाई कुन आचारमा रहेर कसरी कुन विधिले उपासना गर्दा उचित हुन्छ, तदनुसार उपासना गरेमा देवता प्रसन्न हुने र उपासनाको फल प्राप्त हुने हुन्छ ।

मार्गहरूमा वाम मार्ग दक्षिण मार्ग भन्दा श्रेष्ठ र त्यसभन्दा पनि कुलमार्ग अझ श्रेष्ठतर छ । कुलमार्गभन्दा उत्तम अर्को कुनै मार्ग छँदै छैन । वैदिक, दक्षिण, वाम र कुल यी मार्गहरूमा जसले सद्गुरुबाट

विधिपूर्वक दीक्षा लिएर जुन मार्गमा प्रवेश गरेको छ, त्यसैले त्यसै मार्गद्वारा आ-आफ्ना देवताको उपासना गरेको उत्तम हुन्छ, नत्र सिद्धि र फल त परै छ, अनिष्टकारक पनि हुन सक्छ ।

तन्त्रचिन्तामणिकारले आम्नायको भेद, आम्नाय अनुसार मार्गभेद, मार्ग अनुसार देवताहरूको पृथक्ता यी सबै कुराहरू संकेत रूपमा द्वितीय प्रकाशमा वर्णन गरेका छन् । साथै कुलधर्मलाई स्वयं शंकरले सबै धर्महरूमा सर्वश्रेष्ठ मानेको, अन्यत्रबाट भ्रष्ट भएकालाई पनि त्राण दिने, सर्वश्रेष्ठ धर्म भनेर यसमा दीक्षित भएर मात्र प्रवेश गर्न हुने, दीक्षित भएर पनि यसका आचारमा एकनिष्ठ हुन पर्ने, यसबाट भ्रष्ट भएमा फेरि अर्को कुनै मार्ग बाँकी नरहने हुनाले त्यसका लागि पतन देखि कुनै आश्रय शेष नरहने कुराको वर्णन गरेर यसलाई शाम्भव शास्त्र भनेर आफ्नी कुलवधू समान गोप्य राख्ने निर्देश दिएको कुरा बताएका छन् ।

## दीक्षा

दीक्षाका सम्बन्धमा तन्त्रचिन्तामणिकारले द्वितीय प्रकाशको अन्त्यमा र तृतीय प्रकाशमा पर्याप्त चर्चा गरेका छन् ।

सद्गुरुले शिष्यलाई ज्ञान विज्ञान प्रदान गरेर पापराशिको क्षय गर्ने हुनाले यो विधिलाई दीक्षा भनिन्छ ।

तन्त्रशास्त्रमा दीक्षाको ठूलो माहात्म्य वर्णन गरिएको छ । दीक्षाले ब्राह्मणलाई ब्रह्मलोक, क्षत्रियलाई इन्द्रलोक, वैश्यलाई प्राजापत्यलोक र शूद्रलाई गन्धर्वलोक प्रदान गर्दछ । दीक्षा सर्वसिद्धिकरी, हर्षसंपत्प्रदायिका, कान्ति-पुष्टि-धनदायिनी भनेर अत्यन्त विस्तृतरूपमा दीक्षाको वैशिष्ट्य शास्त्रहरूमा गाइएको छ । दीक्षाले समस्त उपासनामा अधिकार प्रदान गर्दछ भने अदीक्षित व्यक्तिलाई कुनै पनि साधनाकर्ममा कुनै अधिकार नरहने कुरा स्पष्टरूपमा प्रतिपादन गरिएकोछ । सबै कर्ममा दीक्षा आवश्यक छ भने अदीक्षित व्यक्ति त मर्‍यो भने पनि नरकवासी हुन्छ भन्ने पनि भनिएको छ । त्यसैले दीक्षाले मात्र मन्त्रलाई सिद्धिदायक तुल्याउंदछ नत्र मन्त्र, मन्त्र हुँदै हुँदैन, केवल कालो अक्षर मात्र हुन्छ, त्यति मात्र होइन

अदीक्षित व्यक्तिले आफ्नो इच्छा अनुसार अथवा गुरुमुखबाट प्राप्त नगरिकन कुनै पनि फलमा इच्छाले साधना गर्न थाल्यो भने सिद्धि आदि फल प्राप्त हुन त टाढै रहोस्, उल्टो पद-पदमा विघ्न पर्ने, सिद्धि हानि हुने र साधकलाई समेत अनिष्ट हुने कुरा तन्त्रको उद्घोष छ ।

दीक्षा लिंदा सबभन्दा ध्यान दिनु पर्ने कुरा गुरु र शिष्यको परीक्षा हो । सद्गुरुबाट असल शिष्यलाई दिइएको दीक्षा मात्र फलदायी हुन्छ ।

## गुरु

गुरु साक्षात् शिवकै रूप हुन् । दीन दुःखीहरूको कल्याणका लागि मनुष्यशरीर धारण गरेर स्वयं साक्षात् शिव लोकमा घुमिरहन्छन् । अझ त्यति मात्र के, गुरु त तीन नेत्र नभएका शिव, चार बाहु नभएका विष्णु र चार शिर नभएका ब्रह्मा हुन् । त्यसैले गुरुलाई ब्रह्मा, विष्णु, महेश्वर अझ साक्षात् परब्रह्म नै भनिन्छ । गुरुशब्दमा ग ज्ञानको, र प्रकाशको एवं उ शिवसंगको एकरूपताको प्रतीक हो । गुरु नै परम तत्त्व हुन् । तर यो सबै वैशिष्ट्य सद्गुरुको हो । अभद्र गुरु त स्वयं नष्ट छ भने त्यसले अरुलाई के दान दिनु र के भवसागर तार्नु, त्यसैले सद्गुरुबाट दीक्षा लिएर मात्र ईश्वरोपासना, साधना आदि गर्नु भन्ने तन्त्रहरूको निर्देश छ । वास्तवमा ईश्वर, गुरु, मन्त्र र आत्मा एउटै तत्त्व हुन्, नाममा मात्र फरक छ, तत्त्वमा पृथक्ता छँदै छैन ।

### गुरुको लक्षण

सम्पूर्ण लक्षण (शुभलक्षण) ले युक्त, सम्पूर्ण आगमहरूको तात्त्विक अर्थ जान्ने, सबै मन्त्रहरूको विधिविधानको वेत्ता, अन्तर्मुख, बर्हिदृष्टि जीवहरूमा दया दृष्टि राख्ने, दयालु, निन्दा र स्तुति दुवैमा समदृष्टि राख्ने आदि गुरुका धेरै लक्षण छन् । यिनै शुभ लक्षणलाई हेरी दीक्षाका लागि गुरु रोज्नु उचित हुन्छ ।

त्यसमा पनि कुलगुरु त झन् विशिष्ट हुन्छन् । अकुल - शिव हुन् । कुल-शक्ति र कुल एवं अकुलको अनुसन्धान गर्न सक्ने कौलिक हुन्छन् । कुलभक्त, कुलाचारवित्, कुलज्ञानमा निपुण आदि कुलगुरुका

लक्षण हुन् । कुलदीक्षा लिंदा यस्ता कुलगुरुबाट लिनु श्रेयस्कर हुन्छ । घृणा, शंका, भय, लज्जा जुगुप्सा, कुल, शील र आसक्ति यी आठ पाशहरूबाट मुक्त गराउने स्वयं शिव नै गुरुका रूपमा आएर शिष्यलाई पशुत्वबाट मुक्त गराउंदछन् ।

गुरुका निन्दित लक्षण पनि तन्त्रमा वर्णित छन् । ती लक्षण भएकालाई गुरु बनाउनु उचित हुँदैन । देशभेदबाट पनि गुरु फरक फरक हुन सक्तछन् । उत्तम, मध्यम र अधम गुरुहरू हुन्छन् । सकेसम्म उत्तम गुरु छान्नु पर्दछ । मुख्य कुरो के छ भने गुरु लोभी कदापि हुनुहुँदैन ।

**विशेष ध्यान पुऱ्याउनु पर्ने केही कुरा छन् –**

आफ्ना पिता, वनवासी र सन्यासीहरूबाट दीक्षा लिनु हुँदैन । कुनै प्रभादवश, दीक्षा लिएको रहेछ भने पनि प्रायश्चित गरेर पुन: दीक्षा दिनु पर्दछ । तर सिद्धविद्या रहेछ भने ता गुरुको विचार गर्न आवश्यक छैन । पिता आदिबाट पनि दीक्षा लिनु हुन्छ तर परम्परागत सिद्धविद्या हो भने मात्र । गुरु बनाउंदा ब्राह्मण, क्षत्रिय र वैश्यहरूमा ब्राह्मणले क्षत्रिय र वैश्यबाट, क्षत्रियले वैश्यबाट दीक्षा लिनु निषिद्ध छ । शूद्रले शूद्रैबाट पनि लिन सक्छ । आचार्य, मामा, ऋत्विक्, काका, ससुरा र राजा यी छवटा गुरु हुन सक्छन् । पिता, आमा पट्टिका बाजे, एउटै पेटबाट जन्मेका दाजु, आफूभन्दा कान्छा व्यक्ति र शत्रुपक्षका व्यक्तिबाट लिएको मन्त्र नि:स्तेज हुन्छ । तर शैव र शाक्त सिद्ध मन्त्र चाहिं लिंदा दोष लाग्दैन । वाम मार्गमा भने त्यही मन्त्र वीर्यवान् पनि हुन सक्छ । लोग्नेले स्वास्नीलाई, बाबुले छोरा वा छोरीलाई र दाजुले भाईलाई दीक्षा दिनु वर्जित छ । स्त्री जातिबाट लिएको दीक्षा शुभ हुन्छ । आमाबाट प्राप्त गरेको मन्त्र त आठगुना अधिक शुभ हुन्छ । यस्ता प्रशस्त दीक्षा लिने सम्बन्धमा विधि-निषेधहरू तन्त्रमा वर्णित छन्, यी सबै कुराको विचार पुऱ्याएर दीक्षा लिएमा शुभ र कल्याणकारक हुन्छ ।

वीरदीक्षा र कुलदीक्षा चाहिं पतिले पत्नीलाई दिए पनि हुन्छ । त्यसरी दीक्षा दिंदा शिष्य भएता पनि पत्नी छोरी जस्ती हुंदिन बरु वीरभार्या भनिन्छे ।

शिष्यका पनि असल र निन्दित लक्षणहरू छन् । सबै लक्षण त यहाँ वर्णन गर्नु सम्भव छैन, ग्रन्थ नै हेर्नु आवश्यक हुन्छ, तापनि विशेषतः गुरुको आज्ञाकारी, विनम्र, श्रद्धावान्, दयालु, देवता र मन्त्र प्रति आस्था राख्ने, लोभ नभएको शिष्य सत्पात्र हुन्छ र यस्ता शिष्यलाई दिएको दीक्षा फलदायी हुन्छ । एकवर्ष, ६ महिना, तीनै महिना भए पनि शिष्यको लक्षण विचार गरेर मात्र दीक्षा दिनु उचित हुन्छ । शिष्यले गरेको पुण्य र पापले गुरुलाई पनि छुन्छ । यसैले दीक्षाको निमित्त गुरु र शिष्यको परीक्षा अति आवश्यक छ ।

एक पल्ट दीक्षा लिइसके पछि गुरुको त्याग गर्नु हुँदैन । कथं कदाचित् असद् गुरु पर्‍यो भने सन्देहको अवस्थामा अर्को गुरु कहाँ पनि जान सकिन्छ । पुस्तकमा हेरेर सिद्धिको कामनाले आफैं मन्त्र जप्न थाल्नु हुँदैन । स्वप्नमा देखेको मन्त्र पनि गुरुबाट लिएर मन्त्रोपासना गर्नुपर्छ । एउटै कुरो मुख्य छ - सद्गुरुबाट पाएको दीक्षा मात्र श्रेयस्कर हुन्छ, यही यसको सारांश हो ।

**मन्त्र**

मन्त्र पनि पाँच प्रकारका हुन्छन् - १. ब्राह्मणमन्त्र - मायाबीज भएको, २. क्षत्रियमन्त्र - श्रीबीज भएको ३. वैश्यमन्त्र - कामबीज भएको ४. शूद्रमन्त्र - वाग्भवबीज भएको र ५. पौलस्त्यमन्त्र - उक्त चारै बीज नभएको ।

ब्राह्मणलाई चारै बीज भएका, क्षत्रियलाई तीन बीज भएका, वैश्यलाई दुई बीज भएका, शूद्रलाई एकबीज भएका र हीनवर्णलाई अधिक वर्ण नभएका मन्त्र दिनु उचित हुन्छ । प्रत्येक देवताका स्वरूप वर्णन गर्न सक्ने, सिद्धिदायक मन्त्रहरू बेग्ला-बेग्लै हुन्छन् । आफ्नो जो परम्परा छ, आफ्ना गुरुको जो मत छ तदनुसार विधिपूर्वक मन्त्र लिएर साधनामा

लागेमा सिद्धिप्राप्ति सरल हुन्छ । अन्यथा स्वेच्छाले जथाभावी मन्त्र लिएर जति जपे पनि इष्टसिद्धि हुँदैन, उल्टो अनिष्टको संभावना अधिक हुन्छ ।

## संस्कार

तन्त्रचिन्तामणिकारले मानवसंस्कारका विषयमा धेरै चर्चा गरेका छन् । संस्कारको प्रयोजन हो देहशुद्धि । संस्कार नभई देवता र पितृ सम्वन्धी कर्ममा अधिकार प्राप्त हुँदैन । त्यसैकारण सबैले आ-आफ्ना आश्रम-धर्म अनुसार संस्कार गरेर मात्र विविध कर्म गर्नु पर्दछ ।

संस्कारहरूको संख्याका वारेमा अलि मतभेद छ । कसैले सोह्र संस्कार मान्दछन् भने कसैले दश मात्र । तैपनि ग्रन्थकारले सोऱ्है मानेकाले प्रकृतमा तिनीहरूकै चर्चा गर्नु उपयुक्त हुनेछ ।

### संस्कारहरू

**१. गर्भाधान –**

गर्भाधान संस्कार दक्षिणाचारीले आफ्नो कल्पमा वताइएको वाटोवाट र वामीहरूले भने दूतीयाग अनुसार गर्नु पर्दछ । यसैको अर्को नाम जीवसेक पनि हो । यसमा ॠतुसंस्कार गरेर विधिपूर्वक पुरुषले पत्नीका गर्भमा बीजवपन गर्दछ ।

**२. पुंसवन –**

यो संस्कार गर्भाधानको तेस्रो महिनामा हुन्छ । यसमा विधिपूर्वक स्त्रीलाई जौ र मास मिसिएको दही पिउन दिइन्छ । यो गर्भरक्षा गर्न र विघ्न पन्छाउन गरिन्छ ।

**३. सीमन्त वा सीमन्तोन्नयन –**

यो संस्कार गर्भ रहेको चौथो, छैठौं वा आठौं महिनामा गरिन्छ । यसमा सुनको कांगियो गर्भवतीको केशमा वाँधिन्छ । सन्तान ठीक दश महिनामा होस् र स्वयं गर्भिणीले तेजस्विनी भएर योग्य सन्तान जन्म दिन सकोस् भन्नु यस संस्कारको प्रयोजन हो ।

**४. जातकर्म –**

यी संस्कार सन्तानको जन्म हुनासाथ गरिन्छ । यसमा कांसका भाडामा घ्यू र मह हालेर सन्तानलाई ख्वाइन्छ । यसबाट आयु, तेज, बल र मेधा बढ्दछ भन्ने वचन छ । यसैमा सुनको सिन्काले सन्तानको तालुमा आ-आफ्ना मन्त्रको मूल बीज लेखेर मेधावृद्धिको कामना गरिन्छ ।

**५. नामप्रदान –**

यो संस्कार सूतकको अन्त्यमा शुभ दिन पारेर गरिन्छ । यसमा सन्तानको दाहिने कानमा उसको नाम सुनाइन्छ ।

ताराचक्र, गणचक्र, राशिचक्र, पञ्चभूतचक्र, अकडमचक्र, सिद्धारिचक्र, मातृकाचक्र, ऋणिधनिचक्रहरू जुराएर मात्र जुन नाम बच्चाकालागि श्रेयस्कर हुन्छ त्यही राखिन्छ ।

**६. अन्नप्राशन –**

यो संस्कार बच्चा जन्मेको छैठौं अथवा आठौं महिनामा गरिन्छ । यसमा विधिपूर्वक पाँचपल्ट बच्चालाई खीर ख्वाएर अरु अन्न, व्यंजन आदि दिइन्छ ।

**७. चौल –**

यो संस्कार आफ्नो कुलाचार अनुसार जन्मको तेस्रो अथवा पाँचौं वर्षमा गरिन्छ । यसमा बच्चाको कपाल काट्ने विधान हुन्छ ।

**८. मौञ्जीबन्धन –**

यो मन्त्रसंस्कार हो र ब्रह्मतेज प्राप्तिका लागि गरिन्छ । यो उपनयन भित्रको संस्कार हो । यसमा गुरुले मूंज वा कुशको गांठो परेको कन्धनी शिष्यलाई दिएर ब्रह्मचर्यको निमित्त प्रदान गर्दछ ।

९. **प्राजापत्य व्रत–**

यसमा गुरुद्वारा शिष्यलाई प्रजापति, सविता र वरुण देवतामा समर्पित गरी उसको मङ्गलकामना गरिन्छ । यसैमा सावित्रीको ग्रहण हुन्छ र शिष्यले गुरुसंग ब्रह्मविद्याको उपदेश प्राप्त गरेर आफूलाई आश्रमी बनाउन प्रार्थना गर्दछ ।

१०. **सौम्यव्रत –**

यस संस्कारमा वैदिकहरूले आफ्नो कल्प अनुसार र तान्त्रिकहरूले भने भैरव, बटुक, कालभैरव आदिको मन्त्र ग्रहण गर्दछन् । दरिद्र साधकहरूले स्वर्णाकर्षण भैरवविद्या पनि प्राप्त गर्दछन् ।

११. **आग्नेय –**

यो संस्कार वैदिकहरूले गृह्यसूत्र अनुसार र तान्त्रिकहरूले अङ्ग देवताहरूको मन्त्र पहिले गुरुका मुखबाट सुनेर पूजाका विधि विधान र विधि उपचारका विषयमा शिक्षा ग्रहण गरेर पूर्ण गर्दछन् ।

१२. **वैश्वदेव –**

यस संस्कारमा आफ्ना इष्टदेवताको दीक्षा ग्रहण गरिन्छ ।

१३. **गोदान –**

यस संस्कारमा तान्त्रिकहरूले आफ्नो देब्रे कोखामा विद्यमान पापपुरुषलाई मन्त्रद्वारा वाहिर निकालेर त्यसको विनाश गर्ने क्रिया गर्दछन् । यसबाट पुरश्चरण गर्ने योग्यता साधकमा प्राप्त हुन्छ ।

१४. **समावर्तन –**

यसमा तान्त्रिकहरूले दिनभरि जप गरेर सायंकालमा चक्रपूजा गरेर सिद्धिका निमित्त साधना गर्दछन् ।

१५. **विवाह –**

यो संस्कार विद्या प्राप्त गरिसकेपछि ब्रह्मचर्य छोडेर गृहस्थाश्रममा प्रवेश गर्नका निमित्त गरिन्छ । विवाह ब्राह्म र शैव दुई प्रकारको हुन्छ । शैव विवाहमा पनि चक्रको नियमानुसार हुने र जीवनावधि गरिने दुई प्रकारको हुन्छ । चक्रको नियम अनुसार स्त्री र पुरुषका इच्छाले हुने वीर विवाह पहिलो हो, यसमा वर्ण र उमेरको विचार हुँदैन । जातिवन्धन पनि यसमा कडा हुँदैन । त्यसबाट उत्पन्न सन्तान अनुलोम विवाह छ भने माताको जातिको र विलोम विवाह छ भने पंचम (सामान्य) वर्णको हुन्छ । यसमा समाजको सुव्यवस्थाको लागि केही सीमाहरू पनि निश्चित गरिएका छन् ।

१६. **पितृमेध –**

यो संस्कार अन्तिम संस्कार हो, पितृमुक्तिका लागि गरिन्छ । यसमा पनि वैदिक र तान्त्रिक दुवै प्रक्रियाहरू छन् । तान्त्रिकहरूले शक्तियुक्त ब्राह्मणलाई मात्र भोजन गराउनु पर्ने, तुलसी र भृङ्गराज पुष्प वर्जित हुने आदि विशेष विधान छ ।

यहाँ तन्त्रान्तरमा खास गरी महानिर्वाण तन्त्रमा नवौं उल्लासमा दशवटा मन्त्र संस्कारका विधि उल्लिखित छन् । जीवसेक, पुंसवन, सीमन्तोन्नयन, जातकर्म, नामकर्म, निष्क्रमण (बालकलाई घर बाहिर निकाल्ने), अन्नप्राशन, चूडा, उपनयन र विवाह । यसमा शूद्रलाई र सामान्य वर्णलाई उपवीत निषिद्ध छ । विधिहरूमा पनि आचारभेदेन भिन्न हुने हुन्छ । सिद्धान्त, वाम र कुल तीन आचार प्रमुख रूपमा वर्णित छन् । यिनीहरूमा सिद्धान्त भन्दा वामाचार ठीक र त्यसभन्दा पनि कुलाचार श्रेष्ठ मानिन्छ । खास गरेर

तान्त्रिक कर्म मानव मात्रका लागि उदार भावले गरिने हुनाले यहाँ धेरै बन्धनहरू देखिंदैनन्, तापनि कुल, परम्परा, दीक्षा आदिबाट नियन्त्रित हुने समाजलाई उच्छृङ्खल हुन नदिने व्यवस्था भने नभएको होइन ।

## मन्त्रसंस्कार

तन्त्रमा मन्त्रको ठूलो स्थान छ । मन्त्र नै विद्या हो । मन्त्र, यन्त्र, देवता गुरु एउटै तत्त्व हुन् । तर मन्त्र जागृत भयो भने मात्र सिद्धिदायक फलप्रद हुन सक्छ । त्यसैले यसका पनि सोऱ्हवटा संस्कार वर्णित छन् । यिनै संस्कारद्धारा संस्कृत मन्त्रको जप आदिमा प्रयोग गरेमा इष्टसिद्धि हुने हुन्छ । असंस्कृत मन्त्रको प्रयोग फलदायी कदापि हुँदैन । मन्त्रलाई विविध देवताका शाप छन् । हुन त मन्त्रलाई के शाप, कसको शाप, किन शाप, तैपनि यी सबै कुरा अपवित्रमा नपरोस् भन्ने उद्देश्यले गरिएको विधान हुन् जस्तो लाग्दछ ।

मन्त्रका सोऱ्ह संस्कारमा जागरण, संजनन, ताडन, बन्धन, अभिषेक, विमलीकरण, आप्यायन, समावर्तन, तर्पण, दीपन, गोपन र अरू पांचमा जप, होम, तर्पण, मार्जन र ब्राह्मणभोजन यी हुन् । तर यी मध्ये संजननदेखि गोपनसम्मका दश संस्कार मुख्य छन् । यिनका छुट्टै विधि छन् । यिनै शास्त्रोक्तविधिद्वारा मन्त्रहरूलाई संस्कार गरेर देवताका शापवाट मुक्ति दिलाएपछि मात्र मन्त्र फलदायी हुन सक्छ ।

मन्त्र वास्तवमा छिन्न, रुद्ध, स्तम्भित, कीलित हुन्छन् । यी मन्त्रहरू सुप्त हुन्छन्, मूर्च्छित हुन्छन्, यिनीहरूमा वीर्य (सामर्थ्य) हुँदैन । यिनलाई संस्कृत गर्नुपर्ने हुन्छ । अनि मात्र यिनी जागृत र वीर्यवान् हुन्छन् र इष्ट कारक बन्न सक्छन् ।

दीक्षा पनि जहिलेसुकै लिएर हुँदैन । शुभ महिना, पक्ष, वार, नक्षत्र, योग, करण, लग्न, काल आदि जुराएर मात्र लिनुपर्दछ, तर सद्गुरुको प्राप्ति ज्यादै दुर्लभ हुनेहुनाले विद्या, दीक्षा लिंदा त्यस्तै गुरु पाइएमा काल आदिको शोधन गरिरहनु नपर्ने पनि निर्देश तन्त्रको नभएको

होइन । मोक्ष प्राप्तिको दीक्षा छ भने सूर्य र चन्द्र ग्रहण, महाष्टमी, गुरुपर्व आदि विशेष पुण्य पर्वमा, पुण्य तीर्थहरूमा, अत्यत तीव्र इच्छा भएमा काल आदिको शोधनको बन्धन हुँदैन । तैपनि सकेसम्म शुभ कालको अनुसरण इष्टप्रद हुन्छ ।

यति मात्र होइन, दीक्षामा पनि विधि र विधानहरू छन् । दीक्षा लिने स्थान निर्धारण गर्न पनि भूमिपरीक्षा गरेर निषिद्ध भूमिको त्याग गर्नुपर्दछ । भूमिमा विशेषत: शल्यदोष पर्दछ, त्यसको उद्धार गर्न अपेक्षित छ । त्यसपछि त्यहाँ वास्तुपूजा हुन्छ । अनि विविध देवताको पूजन गरेपछि उनीहरूलाई वलिप्रदान गरेर दीक्षाको शुभ अथवा अशुभ के हुने हो, यसको परीक्षा गरेर मात्र दीक्षा लिनु श्रेयस्कर हुन्छ । यसलाई वास्तुयाग भनिन्छ । यो दीक्षाका लागि ज्यादै महत्त्वपूर्ण मानिन्छ ।

दीक्षाका निमित्त मण्डपनिर्माण गर्दा कुन दिशा ठीक हुन्छ । यो छानेर साधन गरिन्छ, अनि मण्डपनिर्माण गर्ने छुट्टै मापन (नाप्ने) प्रक्रिया छ । यसमा पनि क्रमदीक्षा र कुलदीक्षाका निमित्त विशेष छुट्टै मापन विधिहरू पनि छन् । मण्डपमा पनि कुन ठाउँमा कुन देवतालाई प्रतिष्ठित गर्ने हो यसको विधि छुट्टै छ । मण्डपको शृङ्गार, अनि कुण्डको स्वरूपहरू चतुरस्रकुण्ड, योनिकुण्ड, अर्धचन्द्रकुण्ड, पद्मकुण्ड, अष्टास्रकुण्ड, पञ्चास्रकुण्ड आदि छन् । फेरि स्रुक् स्रुवाहरू शास्त्रोक्तविधि पूर्वक गराएर विधिपूर्वक होम गरेर मात्र दीक्षा ग्रहण गर्ने निर्देश तन्त्रहरूमा वर्णित छ ।

तन्त्रमा विशेषत: दीक्षामा अङ्कुरार्पणको ठूलो महत्त्व छ । प्रतिष्ठा, दीक्षा, स्थापना, उत्सव, सम्प्रोक्षण र विवाह एवं मौञ्जीबन्धन आदि धेरै ठाउँमा शान्तिका लागि अङ्कुरार्पण गरिन्छ । त्यस्तै बलिको पनि उत्तिकै प्राशस्त्य छ । देवताहरू बलिप्रिय भएकाले बलि अर्पण नगरी सिद्धि हुँदैन, अनिष्टशान्ति हुँदैन ।

## दीक्षाभेद

दीक्षाका पनि यिनका भेद अनुसार छुट्टै-छुट्टै विधिहरू छन् । दीक्षाका धेरै भेद छन् । तिनमा पनि तह-तह छन् । क्रमश: तह पार गर्दै

जाने छुट्टै प्रक्रिया छन् । सबभन्दा क्रियावती दीक्षा, वर्णमयी दीक्षा, वेधमयी दीक्षा, अनि त्यसपछि पूर्णाभिषेक दीक्षा, साम्राज्य दीक्षा, सर्वसाम्राज्य दीक्षा, मेधा दीक्षा, सर्वाधिक दीक्षा आदि महत्त्वपूर्ण दीक्षाहरू छन् । यिनीहरूमा सर्वप्रथम लिइने र धेरैले लिने प्राथमिक दीक्षा क्रियावती दीक्षा हो । यसमा पूर्व दिनमा गर्नुपर्ने पूर्वाङ्गविधि, शिष्य र गुरुको आचरण र नियम, गुरुवरण आदिका साथ त्यस दिन राती के स्वप्न देखिन्छ त्यसको परीक्षा गरेर दीक्षा शुभ वा अशुभ के हुने हो, हेर्ने, स्वप्न देवतामा निवेदन गर्ने, देवताको पूजा गर्ने विधान छ । तान्त्रिक कर्ममा उपयुक्त कर्म - सर्वतोभद्र आदि मण्डल, कलशस्थापन, हवन, मन्त्रदान आदि सबै कर्म विधिपूर्वक गर्न आवश्यक हुन्छ ।

खास गरेर क्रियावती दीक्षामा विविध मन्त्रप्रयोगपूर्वक गरिने क्रियाहरूको महत्त्व हुन्छ । यसमा पनि कुलस्त्री जसलाई वीरनायिका पनि भन्दछन् । यिनको दीक्षाको अलि फरक विधि पनि पाइन्छ ।

वर्णमयी दीक्षामा शिष्यका शरीरमा विभिन्न स्थानमा खास-खास वर्णको न्यास गरिन्छ । देवता मन्त्ररूप, मन्त्र वर्णरूप भएकाले सम्पूर्ण वर्णहरू चैतन्यस्वरूप हुन् र शिष्यचैतन्यलाई देवताचैतन्यमा मिलाएर शिष्यलाई देवतास्वरूपमा पुऱ्याउनु नै खास गरी वर्णमयी दीक्षाको विशिष्टता हो र यो अत्यन्त ज्ञानदायी हुन्छ ।

**कलादीक्षा –**

यसमा पनि निवृत्ति, प्रतिष्ठा, विद्या, शान्ति, शान्त्यतीता आदि कलालाई शिष्यका शरीरका विद्ध गराउने काम गरिन्छ । खास-खास वर्णमा विशिष्ट कला रहन्छन् । यसैले कला दीक्षा पनि वर्णमयी दीक्षामा नै पर्दछ ।

**वेधमयी दीक्षा –**

खास गरी कौलिक र वाम मार्गमा फलदायी हुन्छ । षट्चक्रयोग अथवा कुण्डलिनीयोगमा क्रिया प्रधान हुन्छ । यो दीक्षा विधिपूर्वक लिएर सफल भयो भने जीवन्मुक्तता प्राप्त हुन्छ ।

**स्पर्शमयी दीक्षा –**

यस दीक्षामा सिद्ध गुरुको कृपा नै मुख्य मानिन्छ । गुरुले शिष्यको शिरमा स्पर्श गर्नासाथ सद्य:ज्ञान प्राप्त हुन्छ । यो दीक्षा शाम्भवी दीक्षा हो ।

**उपदेश र कौलिकोपदेश –**

अरू दीक्षाहरू ग्रहण गर्न विधिविधानका दृष्टिले सरल नहुने हुनाले कलियुगमा खास गरी साधनका निमित्त उपदेश वा कौलिकोपदेश गरिन्छ । यो पनि एक प्रकारको दीक्षा नै हो । चन्द्र-सूर्य ग्रहणको समयमा, विशेष तीर्थहरूमा, पर्वविशेषमा, गुरुले मन्त्रदान मात्र गरेमा यो उपदेश मात्र हुन्छ । यस्तै कौलिकविधिले न्यास एवं पात्रस्थापनापूर्वक देवीपूजा गरेर कारणतत्त्व शिष्यका मुखमा दिएर गुरुले दिएको कौलिक मन्त्र कौलिकोपदेश हो । अन्यायपूर्वक, धनको लोभले लिए-दिएको दीक्षा अनिष्टदायक हुन्छ ।

**स्वप्नमा पाएका मन्त्रको उपासना –**

स्वप्नमन्त्र तीन प्रकार हुन्छन् १. विराट् २. शिवताण्डव र ३ त्रिपुरा । पातालमा विराटचक्र र स्वर्गमा शिवताण्डव र त्रिपुराचक्र रहन्छन् । पातालचक्रमा अञ्जन, गुटिका, गुप्ति आज्ञासिद्धि रहन्छन् । ताण्डवचक्रमा खड्गसिद्धि, वेतालसिद्धि, परकायप्रवेश, चराचरगति, अणिमादि अष्टसिद्धिका मन्त्र रहन्छन् । त्रिपुराचक्रमा मनोरथसिद्धिका मन्त्र रहन्छन् । स्वप्न लब्ध मन्त्रमा ऋषि, छन्द, देवता आदि उल्लिखित नहुने हुनाले शिव ऋषि, गायत्री छन्द र चिद्रूपा देवता, कादि बीज, स्वरशक्ति, अव्यक्त कीलक, मातृका पीठ आदि हुन्छन् । त्यहाँ दक्षिणामूर्तिलाई गुरु मानेर विष्णु, ब्रह्मा र शंकरलाई गुरुमण्डलमा अर्चना गरिन्छ । त्यसपछि मात्र मन्त्रप्रयोग योग्य हुन सक्छ ।

प्राप्त मन्त्रको सामान्यतया त्याग गर्नु हुँदैन । कदाचित् अनिष्ट आपत्तिवशात् त्याग गर्ने पर्‍यो भने देवताको पूजन गरी मन्त्रेशलाई प्रार्थना गरेर विधिपूर्वक मन्त्रको विसर्जन गर्नु पर्दछ । पछि अन्य सद्गुरुको आश्रय लिएर अर्को मन्त्र प्राप्त गरी साधना गर्न आवश्यक हुन्छ । यस्तै

देवताको पनि त्यागको विधि निर्दिष्ट छ । यसैले मन्त्र र देवताको त्याग त्यसै गर्न हुदैन, आवश्यक परेमा शास्त्रोक्त विधिद्वारा मात्र हुन अत्यावश्क छ ।

**क्रमदीक्षा –**

प्रथम काली त्यसपछि तारा, अनि सुन्दरीको क्रमदीक्षा हुन्छ । कामाख्या तन्त्रमा क्रमदीक्षाको विशेष वर्णन छ । गुरुमुखवाट उक्त देवताहरूको देशिकले क्रमैसित शिष्यलाई दिँदै जाने ज्ञान क्रमदीक्षा हो । यसवाट शिष्यले साधनाको तह चढ्दै जान्छ, व्युत्क्रमवाट साधकको पतनको सम्भावना हुन्छ । जहाँ क्रमदीक्षा हुन्छ त्यहीं पूर्णाभिषेक पनि हुन्छ । पूर्णाभिषेकवाटै पूर्णता प्राप्त भएर आचार्यत्व प्राप्त गर्न सकिन्छ । कौलिकका लागि त पूर्णाभिषेक अत्यन्त आवश्यक हुन्छ । यी दसै महाविद्याका विधिहरूमा आवश्यक छ । पूर्ण रूप त शिव नै हुन्छन् । त्यस पदमा पुगेपछि देह, सुख, दु:ख, जन्म, मृत्यु आदि कुराको कुनै महत्त्व रहँदैन । पूर्णाभिषिक्त दीक्षित साक्षात् ब्रह्मस्वरूप नै हुन्छ । पूर्णाभिषिक्तको सर्वत्र अधिकार पनि निर्वाध हुन्छ । यस्तै साम्राज्यमेधा, महासाम्राज्यमेधा, दिव्यसाम्राज्यमेधा र सर्वसाम्राज्यमेधा आदि दीक्षाहरू ज्यादै विशिष्ट दीक्षा हुन् । महाविद्याहरूका भेदले उनीहरूको साधनाका विशिष्ट तह अनुसार यी दीक्षाहरूको पनि तह-तह छन् । दिव्यसर्वसाम्राज्यदीक्षा नै अन्तिम हो । यसभन्दा विशिष्ट र परको दीक्षा कुनै हुँदैन । यी सवै अभिषेकदीक्षा हुन् । यसरी दीक्षित व्यक्ति, देवता स्वरूप नै हुन्छ, व्रह्म स्वरूप हुन्छ र त्यस्ताले भवचक्रको भोग गर्नु पर्दैन भन्ने तन्त्रको निर्देशन छ । तर एउटै कुरा के छ भने अङ्गवैगुण्य, विधिवैगुण्यवाट सिद्धि र फल सम्भव छैन । सवभन्दा ठूलो कुरा ईश्वरकृपा हो, स्वयं ईश्वर गुरुरूपमा प्राणीको अनुग्रह गर्न आउँछन् र मानवको कल्याण गर्दछन् ।

**गुरुभक्ति –**

तान्त्रिकसाधनमा गुरुभक्ति र गुरुप्रतिको निष्ठाले ठूलो भूमिका खेल्दछ । शिव रुष्ट भएमा गुरुले वचाउँछन्, गुरु रुष्ट भएमा कसैले

बचाउन सक्तैन भन्ने तन्त्रको उद्घोष छ । ईश्वर, गुरु र आत्मा यी मूर्तिका दृष्टिले मात्र फरक छन्, तत्त्व यौटै हुन् भनेर गुरुलाई ईश्वररूप मानिएको छ । त्यसैले शिष्यले गुरुलाई सर्वदेवमय मानेर साधन गर्नु आवश्यक हुन्छ ।

गुरुमा पनि दिव्यौघ (देवताहरू), सिद्धौघ (सिद्ध नाथहरू) र मानवौघ मुनिहरू एवं गुरु, परमगुरु, परात्परगुरु आदि पर्दछन् । सम्प्रदायका भेदले गुरुपंक्तिमा पनि भेद हुने हुन्छ । त्यसैले आ-आफ्ना संप्रदायअनुसार गुरुजनको अर्चना साधनाका लागि अभीष्ट हुन्छ ।

कुलार्णवतन्त्रको चौधौं उल्लासमा गुरु-शिष्यपरीक्षाप्रकरण पछि दीक्षाका भेदलाई स्पष्टरूपमा प्रतिपादन गरिएको पाइन्छ । क्रियामयी, स्पर्शमयी र वेधमयीका भेद पछि अन्य प्रकारले पनि दीक्षाका सात भेद बताइएका छन् । समया, विशेषा, साधिका, पुत्रिका, वेधका, पूर्णा र निर्वाण, तर यी दीक्षाका भेदहरू पनि उक्त भेद अन्तर्गत नै पर्ने हुनाले यिनको छुट्टै विश्लेषण गर्न आवश्यक पर्दैन होला ।

वास्तवमा शिष्यको आत्मा सित गुरुले आफ्नो अभिन्नता स्थापित गरेर शिष्यको चैतन्यरूपी भोगभूमिलाई सम्पूर्ण रूपले विशिष्ट प्रक्रियाद्वारा शुद्ध गर्नु नै दीक्षाको प्रमुख प्रयोजन हो । यो गुरुको अभावात्मक कार्य हो । त्यसपछि भावात्मक कार्य सुरु हुन्छ । ज्ञान दीक्षाद्वारा चित्, आनन्द, इच्छा, ज्ञान र क्रिया शक्तिहरूको शिष्यमा उद्भावन पनि दीक्षाको विशिष्ट प्रयोजन हो ।

दीक्षा वस्तुतः दुई प्रकारका छन् १. समय दीक्षा र २. विशेष दीक्षा । शिष्यको शिरमा शिवहस्त (पाशछेदन गर्ने शक्तिविशेष) को अर्पण गरेर पाशको अस्तित्व कायम रहेतापनि संसारलाई उत्पादन गर्ने शक्तिलाई समयदीक्षाले जलाइ दिन्छ । यही शक्तिपात हो, पछि विशेष दीक्षाको प्रभावले आत्माको कर्म, संस्कार परिपक्व हुनका साथै अग्रोन्मुख पनि हुन सक्छ । अनि मात्र मन्त्रग्रहण ईश्वरार्चना आदि सफल हुन सक्छन् ।

त्यस्तै मोक्षार्थी दीक्षा पनि सबीज र निर्वीज हुन्छन् । यिनमा विद्वानहरू र कष्ट सहन सक्ने शिष्यले सवीज दीक्षा लिएर अनेकौं प्रक्रियाद्वारा शिवत्व प्राप्त गर्ने साधना गर्दछ । निर्बीज दीक्षाद्वारा कर्ममय संसारको उपेक्षा गर्दै भावमय जगत्मा प्रवेश गरिन्छ ।

वस्तुत: पशुत्व (बन्धन) बाट जीवलाई मुक्त गराएर शिवत्व, जो स्वत: प्राप्त नै छ, त्यसको बोध पूर्णरूपमा अभिव्यक्त गराउनु नै दीक्षाको ठूलो प्रयोजन हो। अन्य उपायद्वारा यो सम्भव छैन ।

दीक्षाका भेदलाई लिएर भिन्न-भिन्न ग्रन्थमा भिन्ना-भिन्नै मतहरू पाइन्छन् । कतै दीक्षा शाक्ती (शक्ति प्रवेशवाट हुने) कतै शाम्भवी चरणविन्यासवाट हुने र कतै मान्त्री (मन्त्रको उपदेशवाट हुने) भनी तीन किसिमका दीक्षा वताइएको छ । फेरि कतै आणवी दीक्षाका दशवटा भेद वताइको छ - स्मार्ती, मानसिकी, योगी, चाक्षुषी, स्पार्शिकी, वाचिकी, मान्त्रिकी, हौत्री, शास्त्री र अभिषेचिका । दीक्षाका अरू पनि भेद छन्, प्रत्येकको आ-आफ्नो वैशिष्ट्य छ । यसको विश्लेषण गर्दा ग्रन्थगौरव हुने डर छ, त्यसैले यस विषयमा अब यत्ति नै ।

## आचार

देवताका कृपावाट स्थिर मन्त्रसिद्धिका लागि वंशवृद्धि र पछि मोक्षप्राप्तिका निमित्त अहंकारको त्याग गरेर काम्य कर्मलाई परित्याग गरी स्वधर्मको आचरणमा साधक निष्ठावान् भएर लाग्नु पर्दछ । त्यति नसके पनि निषिद्ध कर्म चाहिं गर्नु हुँदैन र विहित कर्म मात्र गर्नु पर्दछ ।

यसका लागि तन्त्रग्रन्थहरूमा साधकका स्थिति अनुसार विभिन्न आचारहरूको वर्णन गरिएको छ - वैदिकाचार, वैष्णवाचार, दक्षिणाचार, कौलाचार, वामाचार आदि । तन्त्रचिन्तामणिकारले वाऱ्हौं प्रकाशमा विशेषत: दक्षिणाचार, कौलिकाचार र वामाचारको वर्णन गरेका छन् ।

दक्षिणाचारमा खास गरेर साधकले समाजमा लोकमर्यादा अनुसार रहनु पर्ने र लोकविरुद्ध कार्य गर्न नहुने कुराहरूका साथै मन, वचन र कर्मद्वारा हिंसा आदि कर्म गर्न नहुने कुरा विशेषत: वर्णन गरिएको छ ।

कुलाचार चाहिं अलि रहस्यमय छ । यसको मूल तात्पर्य सम्झेर वुझेर मात्र कर्म गर्नुपर्ने विधान छ । कुलदीक्षा लिएको साधकले पञ्च मकारले मात्र कुलपूजा गर्नुपर्ने, शक्तिसमन्वित भएर मात्र अर्चना गर्नुपर्ने, चक्र प्रवेश र यसवाट हुने निष्क्रमण विधिको वर्णनका साथै प्रायश्चित्त, भृगुपात, सन्यास, व्रतधारण र तीर्थ आदि गमन गर्न नहुने एवं आफ्नो आचरण र स्थितिलाई गुप्त राख्न भित्र शक्ति, बाहिर देख्दा शैव, सभाका वीचमा वैष्णव आदि नानारूप लिएर हिंड्नु पर्ने कुराहरूको वर्णन कुलाचारमा पर्दछ । सबै आचारहरूवाट भ्रष्ट भएकाले पनि कुलाचारमा रहनसक्ने, तर यसबाट भ्रष्टभएमा अर्को कुनै वाटो अविशिष्ट नरही निरय प्राप्त हुने शास्त्रवचन छ । वामाचार र कुलाचारमा भने त्यति सार्है फरक दृष्टि छैन । यसमा खास गरी पञ्चतत्त्वको अर्चनामा प्रयोग र स्वयं त्यसको विधिपूर्वक सेवा, शक्तिपूजा, अर्न्तयाग, दूतीयाग आदि पर्दछन् ।

कुलाचार र वामाचार अत्यन्त गोप्य छन् । खासगरी पञ्चतत्त्वको प्रयोग र सेवन सम्बन्धमा ज्यादै सावधानी लिनु आवश्यक छ । केवल दीक्षित साधकले मात्र आ-आफ्नो निर्दिष्ट आचारमा रहेर साधनामा मात्र यिनको प्रयोग आफूले पाएको अधिकार अनुरूप गरेर विधिपूर्वक त्यसको सेवा गर्ने विधान तन्त्रमा छ । आफ्नो इच्छा अनुसार मोज-मज्जाका निमित्त पञ्चतत्त्वको प्रयोग निषिद्ध छ । यसमा पनि सवैलाई साक्षात्प्रयोग गर्ने अधिकार छैन । अनुकल्पहरू यिनका धेरै छन्, तिनको प्रयोग गर्नुपर्दछ । समाजमा यस कर्मको विपरीत प्रभाव परेर समाज विकृत नहोस् र अनधिकृत व्यक्तिले यसको दुरुपयोग नगरोस् भनेर यसलाई गोप्य राखिएको छ । यसलाई साधकले क्दापि विर्सनु वा उपेक्षा गर्नु र अवमानना गर्नुहुँदै हुँदैन । तन्त्रचिन्तामणिकारले ग्रन्थको तेन्हौं प्रकाशमा दशमहाविद्याहरूको पृथक् पृथक् क्रमहरूको चर्चा धेरै विस्तारमा नगइकन गरेका छन् ।

## दशमहाविद्याहरूको साधनाक्रम

१. **कालिका (महानील क्रम) –**

कालिका विद्या महानीलक्रमले साधना गर्नाले सद्यः प्रसन्न हुन्छिन् । यो क्रम दुई प्रकारको छ । १-सकल र २-निष्कल ।

१. सकल क्रममा म-पञ्चक, शक्ति अर्चना, दूतीयाग र वामाचारबाट सगुणा कालिकाको अर्चना हुन्छ । यो ज्यादै गोप्य र रहस्ययुक्त छ ।

२. अशक्त साधकले कालिकालाई सच्चिदानन्दस्वरूप मानेर मानसरूपमा कालिकाको सात्त्विक अर्चना गर्नु चाहिं निष्कल क्रम हो ।

२. **तारा (महाचीनक्रम) –**

चीनक्रमबाट तारा शीघ्र फलदायिनी हुन्छिन् । चीनक्रम पनि पाँच प्रकारका छन् - १. ब्रह्मचीन, २-दिव्यचीन, ३-वीरचीन, ४-महाचीन र ५- निष्कलचीन । यी मध्ये सकल र निष्कल दुवै वौद्ध (वज्रयान, तन्त्रयान) का लागि प्रशस्त छन्, तर निष्कल चाहिँ व्राह्मणका लागि पनि हुन सक्तछ ।

महाचीनक्रममा स्नान, जप, पूजन, तर्पण सबै मानसरूपमा सम्पन्न गर्न सकिन्छ । यहाँ जुनसुकै काल पनि शुभै मानिन्छ, अशुभ कुनै हुँदैन । यसमा बाह्य साधनद्वारा (स्नान आदिद्वारा) देह शुद्धिको अपेक्षा रहँदैन । सवै कुरा मानस नै हुने हुनाले मन चाहिं साधकले निर्विकल्प बनाउनु पर्दछ । खानपिन, आहार-विहारमा कुनै बन्धन छैन । जहाँ, जहिले पनि जे गर्दा गर्दै पनि मन्त्र जप अर्चना आदि गर्न सकिन्छ । भगवती तारामै संसारका सम्पूर्ण शुद्धाशुद्ध कर्महरू परिनिष्ठित रहने हुनाले ती सबै त्यहीं छोडेर तिनैलाई हृदयमा राखेर तिनैमा मन रमाएर सम्पूर्ण जगतलाई तेजोरूप मानेर निष्कल भावले अर्चना गर्नु नै महाचीनक्रम हो ।

३. **छिन्नमस्ता (दिव्यचीनक्रम) –**

छिन्नमस्ता (दिव्यचीनक्रम) बाट अर्चना गर्नाले वरप्रदा हुन्छिन् । यिनको अर्चनामा दिक्-काल र स्थितिको नियमबन्धन कुनै हुँदैन । यो क्रम पनि शुद्धाशुद्धिको दृष्टिले त महाचीन क्रम जस्तै नै हो, तर यसमा अझ बढी उपासना क्रममा पञ्चम मकारको प्रयोग प्रशस्त मानिन्छ ।

४. **सुन्दरी (गन्धर्वक्रम) –**

गन्धर्वक्रममा साधकले आफू शृङ्गारयुक्त भएर राजोपचारले अनेकौं भोगका साधनहरूद्वारा सुन्दरीको अर्चना गर्दछ ।

५. **भैरवी (स्वपुष्पक्रम वा भैरवक्रम) –**

यस क्रमले भैरवीको अर्चना गर्दा पञ्चम मकारको गुप्त प्रयोग हुन्छ । त्यस्तो अवस्थामा पनि साधकको चित्त क्षुब्ध वा विकृत हुनु कदापि हुँदैन । आफूलाई भैरव मानेर भैरवीको पूजा यस क्रममा हुन्छ । शक्ति र साधकका बीचमा दाम्पत्यभाव जागृत हुन्छ ।

६. **कमलाक्रम –**

यस क्रममा शुभ्र वस्त्र धारण गरेर, हविष्य खाएर, भूमिमा सुतेर, शुक्रवारका दिन प्रारम्भ गरी सोऱ्ह दिनसम्म लक्ष्मीको अर्चना गरिन्छ । यस क्रममा शुद्धताको बढी ख्याल राखिन्छ र अर्चनासकेसम्म राजोपचारको भावका सम्पन्न गरिन्छ ।

यहीं एउटा अर्को क्रमको पनि चर्चा आउँदछ- त्यो हो ब्रह्ममार्गक्रममा यस क्रममा फेरी म पञ्चकको प्रयोग प्रशस्त मानिन्छ । यस क्रमको अवलम्बन रहस्ययुक्त छ । साधिकार दीक्षितले यसको प्रयोग गरेमा यसको प्रभाव पनि ज्यादै तीव्ररूपमा हुने तथ्य निश्चित छ ।

७. **भुवनेशी (दिव्यभावक्रम) –**

आफ्नो नाम अनुरूप यो क्रम बडो दिव्य छ । यो ब्रह्माण्ड मायाले वेष्टित छ, माया विना कुनै पनि वस्तु यहाँ प्रकाशित हुँदैन । उनैका प्रकाशले मात्र जगत प्रकाशित हुने, नत्र सम्पूर्ण जगत् जड मात्र हुने भावले सम्पूर्ण जगत्लाई देवीमय मानेर माया बीजले भुवनेशीको अर्चना गरिन्छ यस क्रममा ।

८. **धूमावतीक्रम (काकक्रम) –**

यस क्रममा कालो वस्त्र, चिताभस्मको प्रयोग हुन्छ । संसारलाई धूम्रवर्णको धुवाँ समान मानिन्छ । सत्यवादी, शुद्ध, दृढ, आचारी भएर आफ्नो चित्तलाई काग जस्तो बनाएर संसारको उच्चाटन गराउने यो क्रम धूमावतीक्रम अथवा काकक्रम हो ।

९. **बगलाक्रम (सौभाग्यअर्चाक्रम) –**

यस क्रममा पहेंलो वर्णको प्रयोग प्रशस्त छ । साधक स्वयं पहेंलो र उपचार पनि सम्पूर्ण पहेंलै हुन अपेक्षित छ । यहाँ कुमारीको विधिपूर्वक पूजा गरिन्छ । सम्पूर्ण अभिमान, मन, चित्त, बुद्धिका तीन दोषहरू, पाँचै इन्द्रियका आशक्तिहरूको परित्याग गरेर, सुख-दुःख, लाभ-हानि, जय-पराजय, चीसो-तातोलाई समान मानेर सौभाग्यक्रमको अवलम्बन गर्नु अपेक्षित छ । यस क्रमलाई सिद्धक्रम वा पीतक्रम पनि भनिन्छ । खास गरी बगलालाई अत्यन्त मनपर्ने सौभाग्य अर्चा क्रममा चित्त क्षुब्ध हुनु वर्जित छ, शुद्धता मन, वचन, कर्म तीनै चीजमा हुनु ज्यादै जरुरी छ र कन्यापूजन अत्यावश्यक छ ।

१०. **मातङ्गी (महाराजक्रम) –**

यो क्रम आफ्नो नाम अनुरूप वडो दिव्य छ । यस क्रममा मातङ्गीको अर्चना महाराजोपचारले हुन्छ । अनेकौं सुन्दर उपचार नृत्य, गीत, स्तुति, अलंकारले सम्पन्न हुने यो क्रम साँच्चिकै

राजनायक मानिन्छ । त्यसैले राजाहरूले विधिपूर्वक यस क्रमको अवलम्बन गरेर राजमातङ्गीको साधना गर्ने गर्दछन् ।

विशेष- दशमहाविद्याहरूको उपर्युक्त क्रमहरूमा सात्विक, राजस र तामस भावका अर्चनाहरू समाविष्ट छन् । सबैका सकल र निष्कल भाव भेद छन् । सकल भावले उपासना गर्दा उपचारका प्रयोगहरू प्रत्यक्ष वा अप्रत्यक्ष (अनुकल्प) का रूपमा प्रयुक्त हुन्छन्, तर निष्कल भावमा भने देवीलाई परब्रह्मस्वरूप मानेर साधकले उपास्य वा साध्यसँग एकात्मकता स्थापित गरिने हुन्छ । उपचारमा पनि तिनको प्रत्यक्ष प्रयोग साधिकार दीक्षित साधकले मात्र आफ्नो परम्परा अनुरूप, आफ्नै आचार निष्ठ भएर, कत्ति पनि क्षुब्ध न भइकन ईश्वरप्रसादका निमित्त गर्नु आवश्यक छ । आफ्नो लोभ, मोज-मज्जा, स्वार्थ आदिको निमित्त तन्त्र र गुरुवचनको दुरुपयोग गरेमा त्यही प्रयोग अनिष्टकारक हुने निश्चित छ । फेरि कतिपय ठाउँमा प्रतीकको प्रयोग भएको हुन्छ । यसको रहस्य पनि गुरुमुखगम्य हुन्छ । त्यसैले यी प्रयोगहरूलाई गोप्य (लुकाएर वा सुरक्षित गराएर) राख्नु अत्यावश्यक छ ।

तन्त्रचिन्तामणिकारले यी क्रमहरूको चर्चा संकेत रूपमा मात्र गरेका छन् । यिनको विस्तार ग्रन्थान्तरमा प्रशस्त पाइन्छ । प्रयोगको लागि गुरुको मार्गदर्शन र साधकको निष्ठा अत्यावश्यक छ ।

## भाव

भावबाटै सम्पूर्ण कुराहरू प्राप्त हुन्छन्, भाववाटै देवताको दर्शन हुन्छ, भावले नै परज्ञान दिलाउँदछ, त्यसैले प्रत्येक साधकको निमित्त भावको अवलम्वन अत्यन्त आवश्यक छ । जप, होम, पूजा, अर्चना जति गरेपनि भाव विना तिनको यथेष्ट फल प्राप्त हुन सक्तैन तर भाव त मानस धर्म भएकोले यसको ठीक-ठीक परिचय दिन र परिभाषित गर्न कसैले सकेको छैन । तैपनि चिन्तकहरूले यसका तीन भेद बताएका छन् । १-दिव्य, २-वीर र ३-पशु ।

**दिव्यभाव -**

दिव्यभावमा स्थित साधक देवता समान हुन्छ, साध्य र साधकमा कुनै भेद उसका लागि रहँदैन । उसको अन्त:करण शुद्ध हुन्छ । सुख-दु:खको द्वन्द्ववाट ऊ मुक्त हुन्छ । ऊ वीतरागी हुन्छ र सम्पूर्ण प्राणीमा समभाव राख्दछ । देवता स्वयं भएर देवताको उपासना गर्दछ ।

**वीरभाव -**

वीरभावमा स्थित साधक दिव्यभावमा पुग्न सोपान तैयार पारे सरह अनेकौं लौकिक उपचारहरूको साक्षात् वा अप्रत्यक्ष प्रयोग गर्दै उपास्य देवतालाई आफ्नो अभिन्न मान्दै उपासना गर्दछ । उपचारका गुण-दोषले वीर साधक क्षुव्ध हुँदैन । पञ्च मकारको साक्षत् प्रयोग गर्दा पनि उसको मन र इन्द्रियहरूका भाव विकृत हुँदैनन् । स्वयं कुलाचार र वामाचारमा रहन्छ, तर ती सम्पूर्ण आचारहरू देवताप्रसादका लागि हुन्छन्, शरीरतुष्टिका लागि होइन । वीर साधकका भोगवासना निवृत्त भइसकेका त हुँदैनन्, तैपनि उसका सम्पूर्ण प्रयत्न निवृत्तिका लागि उन्मुख हुन्छन् ।

वीरभावलाई पनि चिन्तकहरूले दुई भागमा छुट्याएका छन् । १- सभाव, २- विभाव । सभाव वीरलाई साधनाको बलले तन्त्रको अर्थज्ञान हुन्छ । विषय वासना कम भएतापनि भोग वासना कम भइसकेको हुँदैन । विभाव वीरले भने पशुभाववाट माथि उठेता पनि सभाव वीरले जस्तै तत्त्वज्ञान प्राप्त गरिसकेको हुँदैन । वीरभावमा रहेको साधकले कुलाकुलको ज्ञान गरेर तदनुसार आचरण गर्दछ । वीर आचारमा लोकविरुद्ध जस्तो लाग्ने क्रियाकलापहरू र विधिविधान पनि हुने गर्दछन्, तर भाव शुद्धिका कारण तिनीहरूका प्रयोगले कुनै अनिष्ट फल दिँदैन, वरु इष्टसाधनमा बल प्रदान गर्दछ ।

**पशुभाव -**

पशुभावमा स्थित साधक वेदोक्त फल प्राप्त गर्ने उद्देश्यले द्वैतभावमा रहेर आचरण गर्दछ । यस भावमा गर्न हुने र नहुने कर्तव्या-कर्तव्यको वन्धन धेरै रहन्छ । पशु साधकले निषिद्ध आचरणलाई

कठोरतापूर्वक त्याग गर्नु पर्दछ, किन भने उसको मन शुद्ध भइसकेको हुँदैन, चित्तवृत्ति सामान्यत: वहिर्मुख हुन्छ । यसको मन अशुद्ध क्रियाकलापबाट विकृत हुने सम्भावना अधिक रहन्छ ।

तन्त्रचिन्तामणिकारले अदीक्षित, क्रियाहीन, मन्त्रतन्त्रविवर्जित साधकलाई महापशु हो भनेर लेखेका छन् । यस्ता साधकको तन्त्रपूजामा अधिकार हुँदैन । यो भाव चित्त शुद्ध गर्ने महत्त्वपूर्ण भूमि त अवश्य हो, किनभने यसैबाट माथि उठेर मात्र साधक वीर भावमा पुग्दछ र कुलपूजामा अधिकार पाउँदछ, अनि मात्र दिव्यभावमा पुग्दछ ।

साधनामा पञ्चमकारको प्रयोग पशुभावमा नितान्त वर्जित छ । वीरभावमा यसको प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा अधिकार अनुसार प्रयोग हुन्छ । दिव्यभावमा यसको अर्थ वेग्लै हुन्छ । यस भावमा म-पञ्चक प्रतीकात्मक हुन्छन् । यस प्रकार साधनामा दिव्य भाव उत्तम, वीरभाव माध्यम र पशुभाव अधम मानिन्छ । भाव अनुसार नै विविध आधारहरू पनि हुन्छन् । भावसँगै आचारको पनि ज्यादै घनिष्ठ सम्बन्ध रहने हुनाले त्यसबारे पनि संक्षिप्त चर्चा हुनु प्रासङ्गिक नै लाग्दछ ।

## आचारभेद

आचार भेद सात किसिमका मानिएका छन् - १- वेदाचार, २- वैष्णवाचार, ३- शैवाचार, ४- दक्षिणाचार ५- वामाचार ६-सिद्धान्ताचार र ७- कौलाचार

**वेदाचार -**

यो साधकको बाह्यशुद्धि र शरीरशुद्धिसँग बढी सम्बद्ध छ । यस आचारमा साधक कर्तव्याकर्तव्यको ज्ञान गरेर कर्मद्वारा विहित कर्मको अनुसरण र निषिद्ध कर्तव्यको परित्याग गर्दै चित्तलाई निर्मल तुल्याउने प्रयास गर्दछ र पछि त्यस्तै स्वभावमा परिणत पनि हुन्छ ।

**वैष्णवाचार -**

यो भक्तिको अवस्था विशेष हो । गुरुको आज्ञा निर्विकल्प मानेर वैष्णवाचारमा स्थित साधक, यसका विभिन्न भूमिहरूलाई पार गर्दै श्रीविष्णुलाई प्राप्त गर्ने प्रयास गर्दछ ।

**शिवाचार -**

शिवाचारनिष्ठ साधक सर्वत्र शिवको भावना गर्दछ । यो ज्ञान प्राप्त गर्ने विशेष अवस्था मानिन्छ ।

**दक्षिणाचार -**

यसको अनुष्ठान सर्वप्रथम दक्षिणामूर्तिले गरेकोले उनैको नाममा यो आचारप्रसिद्ध छ । दक्षिण शब्दको अर्थ अनुकूल हो । यसैले यो अनुकूल आचार मानिन्छ । यसमा वहि:शुद्धि, अन्त:शुद्धि र शास्त्रानुशीलनद्वारा प्राप्त ज्ञानलाई बद्धमूल गर्न प्रयास गरिन्छ ।

उक्त चारै आचार पश्वाचार हुन् । पशु भावमा स्थित साधकले आ-आफ्नो परम्परा अनुसार यी आचारमा रहेर साधनाका नियम पालन गर्नु आवश्यक हुन्छ ।

**वामाचार -**

यो आचार पशुआचारबाट माथि उठेको साधकका लागि मात्र प्रशस्त छ । यसमा माथि उल्लेख गरे जस्तै उपचारमा लोकसम्मति र लोकविरोधको परवाह नगरी चित्त क्षुब्ध नपारिकन ईश्वरसँग आफ्नो अभेद स्थापना गर्ने भावले उपासना गर्दछ ।

**सिद्धान्ताचार -**

यस आचारमा वामाचारबाट माथि उठेर साधकले भैरवभावमा रहेर ब्रह्मानन्दको अनुभव गर्न खोज्दछ । सिद्धान्ताचारमा स्थित साधकलाई शुद्धाशुद्धिको भेद अनुभव हुँदैन । ऊ कहिले शैव, कहिले वैष्णव, कहिले शाक्त देखिन्छ, स्वेच्छया आचरण

गर्दछ तर सम्पूर्ण क्रियाकलाप ब्रह्मभावले मात्र सम्पन्न गर्दछ ।

वामाचार र सिद्धान्ताचार यी दुईवटा वीराचारमा पर्दछन् । एउटा वीर साधकले मात्र यी आचारमा रहनु विधि सम्मत मानिन्छ ।

**कुलाचार -**

वामाचार र सिद्धान्ताचारबाट पनि माथि उठेर साधक कुलाचारमा प्रविष्ट हुन्छ । कुल शब्दको अर्थ शिव-शक्ति र तिनको ऐक्य हो । यो विश्वब्रह्माण्डमा जति भेद देखिए तापनि ती सम्पूर्ण भेदहरू कुलभित्र विलीन हुन्छन् । शिव-शक्ति, प्रकाश-विमर्श, ईश्वर-जगत् यी सबै कुलदेखि अतिरिक्त छैनन् । यसै परमाद्वैत भावले गरिने वा हुने उपासना कुलाचारमा हुन्छ । त्यसैले कौलभन्दा पर केही पनि छैन भन्ने गर्वोक्ति तन्त्रशास्त्रको रहेको हो ।

वस्तुत: ब्रह्म मात्र सत्य हो । त्यसदेखि भिन्नरूपमा अनुभूयमान जो प्रतीत हुन्छ, त्यो प्रतीति भ्रमपूर्ण छ । यसै भ्रमलाई हटाएर, सम्पूर्ण प्रतीयमान भेदहरू ईश्वरमा विलीन गराएर ईश्वरमा आफ्नो एकता स्थापित गर्दै ब्रह्मभावको प्राप्ति नै सम्पूर्ण उपासना प्रक्रियाको, साधनाको चरम लक्ष्य हो । एउटा अज्ञानी साधकलाई त्यस चरम लक्ष्यसम्म पुग्न विभिन्न तहहरू पार गर्नुपर्ने हुन्छ । त्यसैको लागि यी भावहरू र आचारहरूले विशिष्ट भूमिका निर्वाह गर्दछन् । नत्र केवल "म ब्रह्म हूँ" भन्दैमा उद्देश्य सिद्ध हुन असम्भव छ ।

## आह्निक

समाजमा विभिन्न तह, स्थिति, स्वभाव र प्रकारका मानिस हुन्छन् । धनी छन्, मध्यम वर्गका छन्, गरीब छन् । कोही घरमा बसेका छन् त कोही परदेशमा छन् । कोही सजाय भोग्न झ्यालखानामा पनि छन् । कोही कुनै जरुरी काममा लागेका छन् त कोही फुर्सतमा छन् ।

कसैलाई जूठो वा सुत्केरो परेको छ आदि आदि धेरै किसिमका मानिसहरू छन् । सबैको स्थिति र स्वभाव भिन्न-भिन्न छन् तर प्रात:कालदेखि सायंकालसम्म, उठेदेखि नसुतेसम्मका कर्महरू सबैले गर्नै पर्दछ, नगरी हुन्न । त्यसैले सकेसम्म सबैलाई मिल्ने खालका साझा कर्महरू र कसैका लागि विशेष कर्मका बारेमा पनि शास्त्रले उपदेश र निर्देश गरेको पाइन्छ । तन्त्रचिन्तामणिकारले पन्ध्रौं प्रकाशदेखि यिनै कर्महरूको विस्तृत निर्देश गरेका छन्, यही आह्निक हो ।

कर्म पनि तीन प्रकारका हुन्छन्, ती त स्पष्टै छन्-१- नित्य (सधैं गर्नुपर्ने नगरे पाप लाग्ने, प्रायश्चित्त गर्नुपर्ने । २- नैमित्तिक (कुनै पर्व विशेषमा मात्र सम्पन्न गर्नुपर्ने, गरेमा पुण्य लाभ हुने नगरे उति हानि नहुने) र ३- काम्य (कुनै कामनाको पूर्णताका लागि गरिने) । यी मध्ये नित्य कर्मलाई आह्निक भन्दछन् । नित्य कर्मका पनि तीनवटा भेद छन्- १-शुद्ध, २- मिश्र र ३- गलित । १- शुद्ध-पूर्ण फल प्रदान गर्ने कर्म, अर्थात्- स्वास्थ्य चित्तले, मनले राम्ररी विचार गरेर गरिने, अहंकार कत्ति पनि नराखिकन गरिने कर्म शुद्ध हुन्छ । २- तिनै कर्म गृहस्थले, दरिद्रले, रोगीले, बाटो हिंड्ने बटुवाले, बन्दीले अथवा भक्तले गर्ने कर्म मिश्र हो । ३- जाडो भयो भनेर, धन छैन जसरी भए पनि कर्म त गर्नै पर्‍यो भनेर, अर्काको दवावमा गरिने कर्म गलित हुन्छ । नित्य कर्मका अरू भेद पनि छन् - १- सात्त्विक, २- राजस र ३- तामस । यी भेदहरू शुद्ध, मिश्र र गलित तीन प्रकारका कर्ममध्ये प्रत्येकका हुन् । अर्थात् शुद्ध सात्त्विक, राजस र तामस, मिश्र सात्त्विक, राजस र तामस एवं गलित सात्त्विक, राजस र तामस । यी नौ किसिमका कर्महरूका फल पनि बेग्ला बेग्लै छन् ।

**कर्मभेद –**

प्रसर्पण - देवमन्दिरमा गरिने संस्कारहरू, भक्तको आस्था र नम्रता आदि कर्म प्रसर्पण कर्म हुन् । यिनले देवताको सालोक्य प्रदान गर्दछन् ।

उपादान - पूजाका विविध साधन, सामग्री, उपचारहरू जुटाउनु, भक्तको सेवा, सत्कार गर्नु यी उपादान कर्म हुन् ।

इज्या - विविध पीठ, यन्त्र, मूर्तिहरूको विधिपूर्वक अर्चना गर्नु इज्या कर्म हुन् । यिनले देवताको सामीप्य प्रदान गर्दछन् ।

अध्ययन - शास्त्रको राम्रो अर्थ बुझेर, मूल मन्त्रका अर्थको भावना गर्नु, जप, तप आदि गर्नु अध्याय वा अध्ययन हो । यी कर्मले ईश्वरको सायुज्य प्राप्ति हुन्छ ।

युति - गुरु, देवता, आत्मा र काललाई बेग्लै वस्तु विशेष नमानिकन सबैलाई एउटै तत्त्वका रूपमा भावना गर्नु युति हो, योग हो । यसबाट लिङ्गदेहको नाश हुन्छ । संकोचबाट विकासतिर, भूमातिर पुऱ्याउँदछ यसले ।

**प्रातःकृत्य -**

यो कृत्य बिहान उठ्ना साथको हो । यसमा साधकले प्रातःकालमा उठेर गुरु र गुरुपत्नीको स्मरण गर्दै मानस पूजा गरिन्छ । यसमा पनि कालीक्रममा ओछ्यानमै गुरुको चिन्तन हुन्छ, ताराक्रममा र छिन्नक्रममा शक्ति- समन्वित भएर गुरुको चिन्तन गरिन्छ र सुन्दरीको क्रममा रात्रीवासलाई छोड्नु पर्दछ । त्यसमा पनि वीर साधकले महाचीन गुरुको ध्यान गरेर मात्र स्वगुरुको चिन्तन गर्नुपर्ने विधान छ ।

प्रह्लादानन्द, सनकानन्द, कुमारानन्द, वशिष्ठानन्द, क्रोधानन्द, सुखानन्द, ध्यानानन्द, बोधानन्द र शुकानन्द, यी नाथगुरुहरू कुल गुरु हुन् । कुलशिष्यहरूले अनुगमन गरिएका यी गुरुहरूको ध्यान भएपछि मात्र स्वगुरुको ध्यान गर्नु वाञ्छनीय छ । त्यसपछि गुरुपादुकामा कुलकुण्डलिनी, छ चक्रहरूको ध्यान, प्राणयाम न्यास, ध्यान, मानसपूजन, समर्पण आदि गरिन्छ । यसमा पनि श्यामाको विशेष मन्त्र छ । त्यसै मन्त्रले इष्ट देवताको अर्चना गर्नु पर्दछ ।

**अजपाविधि –**

अजपा विधिलाई हंस-साधना पनि भनिन्छ । अजपा शब्दको अर्थ आफूले आफ्नै प्रयत्नले जप गर्न नपर्ने, स्वत: भइरहने जप हो । साधकले केवल यसलाई थाहा पाएर यसको चिन्तन र देवताहरूलाई समर्पण गर्नुपर्दछ यही साधना हो । एउटा स्वस्थ मानवले एक अहोरात्र चौबीस घण्टामा एक्काइस हजार छ सय पल्ट सास फेर्दछ । यो सांस फेर्ने क्रममा "ह" कारले वायु वाहिर जान्छ र "स" कारले भित्र पस्दछ । यसरी मानिस नजानिंदो किसिमले २१६०० पल्ट हंस मन्त्रको जप गरिरहेको हुन्छ । यही जपलाई प्रात:कालमा साधकले थाहा पाएर यसको चिन्तनपूर्वक गणेशलाई ६ सय, ब्रह्मा, विष्णु र शिवलाई ६ ६ हजार, आत्मा, परमात्मा र गुरुलाई एक-एक हजार समर्पण गर्नु पर्दछ । यी देवताहरूको स्थान पनि साधकको आफ्नै शरीरभित्रका भावनात्मक ६ चक्रहरू हुन् । यस विषयमा यथा अवसर चर्चा हुने नै छ ।

अजपा विधानपछि आफ्नो इष्टदेवतालाई त्रैलोक्यको चैतन्यमय सम्झेर उनकै आज्ञाले संसारको यात्रा आरम्भ गरेको र रात दिन जे जति काम गरिन्छ ती सबै तिनै परब्रह्मस्वरूप इष्टदेवताकै पूजाका उपचार हुन् । जीवन यात्राको क्रममा स्पर्धा, तिरस्कार, कलि, प्रमाद, भय आदि विकृति, दुर्वृत्तिहरूले प्रभाव नपारून् भनेर प्रार्थनापूर्वक प्रात:कृत्य समाप्त गर्नु पर्दछ ।

**योग –**

यो हंससाधना तन्त्रविद्याको ज्यादै महत्त्वपूर्ण प्रक्रिया योग हो । योगको अर्थको जोड्नु । जीवात्मा र परमात्मा वास्तवमा एउटै तत्त्व हुन् । केवल मायाको प्रपञ्चले दुई वटाको प्रतीति भइरहेको छ - भ्रमात्मिका प्रतीति । यो मायाको जाल हटाएर, द्वैध प्रतीतिको भ्रम निवारण गरी जीवात्मा र परमात्माको ऐक्य स्थापित गर्नु नै योगको प्रयोजन हो ।

योगका चारवटा भेदहरू चिन्तक मनीषीहरूले प्रतिपादन गरेका छन् -

**मन्त्रयोग -**

यो सृष्टि नामरूपात्मक छ । यसै सृष्टिको बन्धनमा सबै मानव परेका छन् । यसकारण नामरूपकै अवलम्बनवाट मुक्ति प्राप्त गर्न सकिन्छ । नाम मन्त्रात्मक हुन्छ र रूप भावात्मक । यसैले मन्त्र, मूर्ति, पीठ पूजा आदिको अवलम्बनवाट देवतामा चित्तवृत्तिको लय गर्नु मन्त्र योग हो ।

यसका सोह्र अंगहरू छन् - भक्ति, शुद्धि, आसन, पञ्चाङ्गसेवन, आचार, धारण, दिव्यदेशसेवन, प्राणक्रिया, मुद्रा, तर्पण, हवन, वलि, याग, जप, ध्यान र समाधि ।

**हठयोग-**

स्थूल शरीरको अवलम्बनबाट बहिर्मुखी चित्तवृत्तिको निरोध गरेर अन्तर्मुख बनाउनु हठ योग हो । यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान र समाधि यी आठवटा हठ योगका अङ्ग हुन् । अथवा षटकर्म, आसन, मुद्रा, प्रत्याहार, प्राणसंयम (प्राणायाम), ध्यान र समाधि यी सातवटा हठ योगका अङ्ग मानिन्छन् । षट्कर्म (धौति, वस्ति, नेति, नौलिकी, त्राटक र कपालभाति) ले शरीरको शोधन हुन्छ । आसनले साधक दृढ बन्दछ । मुद्राले स्थिरता प्राप्त हुन्छ, प्रत्याहारले धैर्य प्रदान गर्दछ । प्राणायामले लाघव र ध्यानले आत्माको प्रत्यक्ष गराउँछ एवं समाधिले भवचक्रवाट अलिप्तता प्रदान गर्दछ ।

**लययोग -**

लययोगका नौ अङ्ग छन् - यम, नियम, स्थूलक्रिया, सूक्ष्मक्रिया, प्रत्याहार, धारणा, ध्यान, लयक्रिया र समाधि । यिनीहरूमध्ये स्थूलशरीरप्रधानक्रिया स्थूलक्रिया र वायुप्रधानक्रिया सूक्ष्मक्रिया हुन् । जीवन्मुक्त गुरुद्वारा प्राप्त कुलकुण्डलिनी उत्थानको क्रिया सूक्ष्मलय क्रिया हो । यिनीहरूको सहायताले जीव शिवत्वमा प्राप्त हुन्छ ।

**राजयोग -**

यो योग सम्पूर्ण योगको राजा (सर्वश्रेष्ठ) भएकोले यसलाई राजयोग भनिएको हो । सृष्टि, स्थिति र संहारको कारण मन हो । यसैको सहायताले राजयोग सिद्ध हुन्छ । अन्त:करणका चार भेद छन्- मन, बुद्धि, चित्त र अहंकार । अन्त:करण दृश्य हो र आत्मा द्रष्टा । दृश्य पनि दुई प्रकारको छ - कारण दृश्य (अन्त:करण) र कार्य दृश्य (विश्व) हो । अन्त:करण र विश्वको कार्य - कारण भाव निबन्ध छ । यसै सम्वन्धवाट सृष्टि हुन्छ । तर चित्तको चञ्चलता यसको निमित्त हो । यसै चञ्चलतालाई जितेर स्वरूपता प्रकाश गर्ने काम राजयोगको हो । यसमा ध्यान ब्रह्मको हुन्छ । समाधि निर्विकल्पात्मक हुन्छ । यसको उपलब्धि चाहिं जीवमुक्ति हो । यस दशामा समस्त द्वैतभाव र विकल्पहरू नष्ट हुन्छन् । यो समाधि साधन शास्त्राभ्यासवाट होइन गुरुबाट मात्र प्राप्त गर्न सम्भव हुन्छ ।

## षट्चक्र

विशेषत: राजयोग, षट्चक्रयोग वा कुण्डलिनी योग भनिने हुँदा यसको निमित्त ६ वटा देहस्थ चक्रहरूको स्वरूप ज्ञान, नाडीहरूको अवस्थिति, कुण्डलिनी रहस्य प्राणको संचार आदि धेरै कुराहरूको विश्लेषण आवश्यक हुन्छ । यी सवै कुराहरूको विस्तार यहाँ सम्भव नहुने हुनाले संक्षेपमा मात्र संकेत रूपले यिनीहरूको चर्चासम्म गर्नु आवश्यक लाग्दछ । मानव देहमा ६ वटा प्रधान साधन चक्रहरू विद्यमान छन् ।

**मूलाधार -**

गुदद्वारभन्दा दुई अङ्गुल माथि र लिङ्गभन्दा दुई अङ्गुल तल मूलाधारचक्र रहन्छ । यसको वर्ण पहेंलो र यसमा चार दल रहन्छन् । वीचमा लँ बीज र चारदलमा व, श, ष, स वर्ण रहन्छन् । यिनका देवता गणेश हुन्छन् ।

यसै चक्रको बीचमा त्रिकोण यन्त्र भित्र स्वयम्भूलिङ्ग रहन्छ र यसलाई साढेतीन फन्का बेरेर सर्पिणी स्वरूप विद्युत् समान वर्ण भएको ज्योतिर्मयकुण्डलिनी विद्यमान छ ।

**स्वाधिष्ठान –**

लिङ्गको मूलस्थानमा रहने स्वाधिष्ठानचक्रको बीचमा अर्धचन्द्राकार यन्त्रमा वँ बीज, छ दलको कमल, दलहरूमा ब, भ, म, य, र, ल वर्ण छन् र यसका वर्ण सिन्दूर र देवता ब्रह्मा हुन् ।

**मणिपूर –**

नाभिस्थानमा रहने मणिचक्रको बीचमा त्रिकोण यन्त्रभित्र रँ बीज, कमलका दश दलहरूमा ड, ढ, ण, त, थ, द, ध, न, द, फ वर्णहरू रहन्छन् । यसको वर्ण नीलो हुन्छ र देवता विष्णु हुन्छन् ।

**अनाहत –**

हृदयस्थानमा रहने अनाहतचक्रको बीचमा षट्कोण यन्त्रका बीच यँ-बीज, बाह्रदलहरूमा क, ख, ग, घ, ङ, च, छ, ज, झ, ञ, ट, ठ वर्णहरू रहन्छन् । यसको वर्ण अरुण हुन्छ र देवता शिव हुन्छन् ।

**विशुद्ध –**

कण्ठस्थानमा विद्यमान विशुद्ध चक्रको बीचमा षट्कोण यन्त्रभित्र हँ-बीज, कमलका सोन्ह दलहरूमा अ देखि अः सम्मका सोह्र स्वरवर्णहरू विद्यमान छन् । यसको रंग धूम्र र देवता जीव हुन्छन् ।

**आज्ञा –**

आँखीभुइँको बीचमा रहने आज्ञाचक्रको बीचमा बिन्दु यन्त्रभित्र प्रणव बीज, कमलका दुई दलहरूमा हँ र क्षँ बीज, वर्ण सेतो र देवता परमात्मा छन् ।

यी छ चक्रहरूमाथि मूर्धास्थानमा चन्द्रमण्डल छ । त्यसमाथि सहस्रदल कमल विद्यमान छ । यसको वर्ण रातो छ र यहीं भगवान् शिव विराजमान छन् । यही ब्रह्मरन्ध्र भनिन्छ ।

उक्त ६ चक्रहरूलाई स्वयम्भूलिङ्गबाट वायाँपट्टि इडानाडी र दाहिने पट्टि पिङ्गला नाडी निस्केर वेर्दै ब्रह्मरन्ध्रसम्म पुगेको हुन्छ । बीचमा सुषुम्णा नाडी छ । हुन त नाडी ७२ हजार छन्, तैपनि तीमध्ये दश नाडी मुख्य र तीमध्ये पनि इडा, पिङ्गला र सुषुम्णा नाडीहरू प्रमुख छन् ।

साधक योगीले स्वयंभूलिङ्गमा बेरिएर सुतेको कुण्डलिनीलाई व्यूँझाएर उठाउँदा ६ वटै चक्रहरूलाई भेदन गर्दै सहस्रारस्थित शिवसित मिलाउँदछ । यसैलाई परम मिलन भन्दछन् । यस क्रियाको सम्पादनबाट अमृत रसको क्षरण हुन्छ र त्यसको पान खेचरी मुद्राबाट गरेर योगी आनन्दमा लीन हुन्छ । यो वडो रहस्यात्मक प्रक्रिया हो । गुरुमुखबाट गम्य छ ।

**नित्यक्रिया –**

अजपाविधानपछि नित्यक्रिया (बाहिरी) आरम्भ हुन्छ । त्यसमा शौच, दन्तधावन, स्नान, आचमन, तर्पण, तिलकधारण, भस्मधारण, सन्ध्या (प्रातः, मध्याहन र सायं), तर्पण र सूर्यार्घ्य पर्दछ । यिनीहरू मध्ये प्रत्येकको निमित्त मन्त्रप्रयोग र प्रक्रिया बेग्ला-बेग्लै छन् । सबै यथाशक्य शास्त्रीय प्रक्रियावाट विधि नछोडिकन गर्न सकेमा मानवजीवन सुखमय, पवित्र, पूजायोग्य हुन्छ ।

उक्त नित्यक्रियाहरूमा विशेषरूपले प्रकाश पार्नु पर्ने क्रिया हो - सन्ध्या । सन्ध्याका भेद तीनवटा छन् - प्रातः, मध्याहन र सायं । अझ कुनै कुनै देवाताका त अर्धरात्रलाई पनि थपेर चारवटा सन्ध्या हुन्छन् । विशेषतया कालिकाको चार, सुन्दरीको चार, तारा र छिन्नाको तीन तीन सन्ध्या हुन्छन् । सबैका गायत्री बेग्लाबेग्लै हुन्छन् । महाविद्याको सन्ध्या गायत्री सन्ध्याको पछाडि मात्र गर्नु पर्दछ । सन्ध्याको लोप गर्नु हुँदैन । गर्‍यो भने शास्त्रोक्त विधिपूर्वक प्रायश्चित्त गर्नु आवश्यक हुन्छ । एउटा

विशेष कुरा के छ भने सूर्यलाई अर्घ्य न दिई सन्ध्या पूर्ण हुँदैन र पूजा गर्न पनि अधिकार प्राप्त हुँदैन ।

**पूजा –**

पूजाको सार्थकता तीन कुरामा निहित छ - पूर्वजन्मका अशुभ कर्मको प्रशमन, जन्म र मृत्युको निवारण र सम्पूर्ण फलप्रदान । पूजाका दुइवटा मुख्य भेद छन् - १ - अन्त:पूजा र २- बाह्य पूजा ।

१- अन्त:पूजा मानसिक हुन्छ । यो योग-प्रक्रिया हो । अन्त:करणका वृत्तिहरूलाई देवातामा विलीन गरेर स्वयं देवस्वरूप भएर आत्मपूजन गर्नु अन्त:पूजा हो । २- बाह्य पूजा - विश्वमा देखिने प्रयोगमा आउने जति पनि वस्तुहरू छन्, ती सबै ईश्वरकै कृपावशात् प्राप्त भएका हुन् । तिनको ईश्वरापर्ण गरी स्वयंले मात्र भोग गर्नु वर्जित छ । भोग ईश्वर प्रसादका रूपमा गर्नु पर्दछ । सम्पूर्ण भोग्य वस्तुलाई प्रतिनिधिका रूपमा सोन्ह, दश वा पाँच उपाचारमा संकोच गरेर ईश्वरार्पण गर्नु, मन, वचन र कर्म ईश्वरको सेवामा समर्पित गर्नु वाह्य पूजा हो । मूल कुरो बाह्य पूजामा ईश्वरलाई व्यापक तत्त्व मानेर सम्पूर्ण भेद उनैमा विलीन गराउनु र त्यसमा आफ्नो अस्तित्व पनि निमग्न गराउनु नै मुख्य हो ।

पूजामा विघ्नापसारण, स्थानशुद्धि, आसनसंस्कार, करशुद्धि, भूतशुद्धि, प्राणायाम, न्यास मुख्य हुन्छन् । यीमध्ये भूतशुद्धि गर्दा गोडादेखि घुंडासम्म पृथ्वीको, त्यहाँबाट नाभिसम्म पानीको, त्यहाँबाट घाँटीसम्म आगोको, त्यहाँबाट आँखीभौंसम्म वायुको, त्यहाँबाट ब्रह्मरन्ध्रसम्म आकाशको स्थान मानिन्छ । ती स्थानहरूका कला देवता सबै पृथक् पृथक् छन् । देहस्थित चक्रहरूको संक्षेपत: माथि उल्लेख गरिसकियो । सुषुम्णाको बाटोबाट जीवलाई पराक्रममा मिलाउन, त्यो पनि "सोऽहम्" का क्रमले र त्यहीं सम्पूर्ण पञ्च भूतहरूलाई विलीन गराउनु आवश्यक हुन्छ ।

**प्राणायाम -**

वामकुक्षिमा रहेको पापपुरुषको चिन्तन गरेर त्यसलाई बाहिर ल्याएर पूरक गरी वायुबीजले शोषण गर्ने अनि कुम्भक गरी वह्निबीजले जलाउने र रेचन गरी जलबीजले भएका खरानी पनि पखालिदिने काम प्राणायाममा हुन्छ । यसबाट साधक पापरहित भएर देवपूजाको अधिकार प्राप्त गर्दछ । यसको अर्को प्रयोजन मन्त्रसिद्धि र योगसिद्धि पनि हो । तर प्राणायाममा पनि विधिहरू छन् । प्राणायाममा आसनको स्थिति, शरीरको स्थिति, मनको केन्द्रीकरण र वायुको संचालनका प्रक्रिया जानेर मात्र गुरुका रेखदेखमा ध्यान पुऱ्याएर गर्नु पर्दछ । अन्यथा अनिष्ट हुन वेर लाग्दैन ।

**न्यास -**

पूजाको अर्को महत्त्वपूर्ण अङ्गन्यास हो । न्यासको अर्थ राख्नु प्रतिष्ठित गराउनु हो । साधकले विविध न्यासद्वारा देवताहरूलाई वर्ण, तत्त्व, कला आदिलाई अङ्ग अङ्गमा प्रतिष्ठित गराउँदछ । यसबाट साधक स्वयं देवरूप वन्दछ र आत्मस्वरूप देवताको अर्चना गर्दछ । यही यसको मूल प्रयोजन हो ।

न्यासका धेरै भेद छन् - अन्तर्मातृका न्यास, वहिर्मातृका न्यास, कलामातृका न्यास, तत्त्वन्यास, योगपीठन्यास, ऋष्यादिन्यास आदि मुख्य छन् । सवैले नगरी नहुने र गर्न त्यति गाह्रो पनि नहुने, नित्य पूजामा प्रयुक्त हुने एउटा न्यास छ- त्यो हो षडङ्गन्यास । यसमा पाँच औंलामा र हतकेलामा गरी ६ ठाउँमा छोएर अङ्गुली अङ्गन्यास हुन्छ र हृदय, शिर, शिखा, वाहु, नेत्रत्रय र अस्त्र गरी ६ ठाउँमा छोएर हृदयादिन्यास हुन्छ । हृदयादिन्यासमा नमः, स्वाहा, वषट्, हुम्, वौषट् र फट्, यी ६ शब्दको प्रयोजन हुन्छ । यी मध्ये हृदयशब्दसँग नमः शब्दको प्रयोग गर्दा हृदयस्थित देवता र सम्पूर्ण ज्ञानमा ऐक्य छ भन्ने तथ्य व्यक्त हुन्छ । शिर शब्दसँग स्वाहा शब्दको प्रयोग हुँदा देवता सवैभन्दा उत्कृष्ट छन् र तिनैमा संसारका सम्पूर्ण विषयवस्तु समर्पित छन् भन्ने कुरा व्यक्तिन्छ । शिखाशब्दसँग वषट्को प्रयोग हुँदा साधका तेजको तेज देवताको तेजसँग ऐक्यस्थापना

हुन्छ । कवचसँग हुम् शव्दको उच्चारण बल शौर्य बृद्धि गराउने प्रक्रिया हो । साथै नेत्रसँग बौषट् शव्दको प्रयोगवाट देवताले सम्पूर्ण जगत् प्रकाशित गरून् भन्ने भाव व्यक्त गरिन्छ र आत्मासँग फट्को उच्चारणले सम्पूर्ण अनिष्ट वस्तुको विनाश गर्ने भाव व्यक्त हुन्छ । न्यास देवता-देवताका वेग्लावेग्लै र विशेष पनि हुन्छन् । ती सबै तत्तद्देवता सम्बन्धी पूजाका स्रोत ग्रन्थबाट विस्तारमा जान्न सकिन्छ ।

पूजा अन्तर र बहि: (भित्री र बाहिरी) दुई प्रकारका हुने कुराको संकेत पहिले नै भइसक्यो । तैपनि विशेषरूपमा अन्त:पूजा वहि:पूजाको (पूर्वावश्यक) पहिले गर्नुपर्ने पूजन हो । अन्त: पूजाबाटै वहि:पूजा सिद्ध हुने हुन्छ । यसमा रहस्य के त भने पूजाको अधिकार देवतालाई मात्र छ । **देवो भूत्वा देवं यजेत्** भनिएकोले स्वयं देवता भएर मात्र देवताको पूजा गर्नुपर्ने हुन्छ । अन्त:पूजा त्यही देवता हुने प्रक्रिया विशेष हो । अन्त: पूजामा हृदयस्थित बिन्दुतीर्थमा स्नान, कुण्डलिनी उत्थान गरी शिवसँग मिलन गराउने क्रिया - सन्ध्या, त्यसबाट क्षरित अमृतले देवतालाई तृप्त गराउने क्रिया - तर्पण, विभिन्न चक्रहरूमा विविध वर्ण, बीजहरूलाई प्रतिष्ठित गराउने क्रिया - न्यास, जीव र ब्रह्मको ऐक्य भावना - ध्यान, ईश्वरप्रतिको तन्मयता - पूजा, शिवशक्तिस्वरूप धागोमा कुण्डलिनी शक्तिलाई गुँथेर त्यसभित्रका वर्णहरूको भावना - जप, मूलाधाररूप कुण्डमा देवतारूप अग्नि प्रज्वलित हुने हुँदा त्यसमा काम, क्रोध आदिलाई मनको सुरोले होम गर्नु - हवन, यही अन्तर्याग हो । यसबाट साधक सम्पूर्ण विकार र कल्मषले रहित भएर देवत्व प्राप्त गर्दछ र देवपूजा गर्ने अधिकारी बन्दछ ।

## बहिर्याग

वहि:पूजामा माथि उल्लेख भए झैं सम्पूर्ण उपचारहरूको प्रयोग हुन्छ । त्यही उपचार समर्पणका विविध क्रिया हुन्छन् । तिनीहरूमा अर्घ्यस्थापना, पीठपूजा, आवाहन आदि मुद्राको प्रयोग, आसन; स्वागत, अर्घ्यप्रदान, पाद्यदान, आचमनीयदान, मधुपर्क समर्पण, पुनराचमनीयदान,

स्नानीय, वस्त्र, यज्ञोपवीत, भूषण, चन्दन, पुष्प, धूप, दीप, नैवेद्य, होम, वलिदान, ताम्बूल, आरति, क्षमापन, प्रणाम, प्रदक्षिणा, संहार, निर्माल्यधारण आदि क्रिया हुन्छन् । यी मध्ये प्रत्येक उपचारको लक्षण, निर्माण र समर्पणका विधिहरू प्रयोग गर्ने मन्त्र आदि पृथक् पृथक् निर्दिष्ट छन् । यी सबैको विस्तार पूर्वक वर्णन तन्त्रचिन्तामणिकारले सत्रौं प्रकाशमा गरेका छन् । यसमा पनि देवताको पूजा गर्ने आधार यन्त्र वा पीठका स्वरूपहरू, शालग्रामका लक्षण, आवाहनी, सन्निधापनी आदि, देवतालाई सान्निध्यमा ल्याउने मुद्राहरूको लक्षण र प्रयोग विधि, आसनका विविध स्वरूपहरू, फूल, धूप, दीप, नैवेद्यका विहित र निषिद्ध कुराहरूको व्यापक वर्णन यहाँ ज्यादै उपयोगी रूपमा गरिएको छ ।

अठारौं प्रकाश चाहिं अलि रहस्यमय भएकोले गोपनीय मानिन्छ । त्यसमा विशेषतया कौल र वाम धर्महरूको उत्पत्ति एवं कौल र वाम आचार अनुसारका पूजा, मकार पञ्चकको प्रयोग आदिका विषयमा निर्देश गरिएको छ । कौल धर्म खासगरी जहाँ वेदका कर्मकाण्ड ध्वस्त भएका हुन्छन्, त्यहीं, त्यसै ठाउँका लागि बढी उपयोगी हुन्छ । शापग्रस्त र व्रह्मकर्मवाट विवर्जित ब्राह्मणहरूका लागि कौलधर्म भोग र मोक्षको साधनाका रूपमा ग्राह्य हुन्छ । वामधर्म चाहिं त्यस्तै खालका क्षत्रिय र वैश्य जातिका लागि उद्धारक हुन्छ । तर कौलधर्म भन्दा वाम धर्म अपेक्षाकृत केही न्यून खालको हुन्छ । सिद्धान्त धर्म त्यो भन्दा न्यून हुन्छ र यसमा शूद्रको अधिकार हुन्छ । परम्परालाई नजानिकन कौलधर्ममा प्रविष्ट हुन वर्जित छ । समयाचारहीन व्यक्तिले, मोजमज्जाका लागि वा अन्य दर्शन, मत मतान्तर मान्नेहरूले पनि कुलधर्म लिनु हुँदैन । श्री गुरुवाट कुल-धर्मको रहस्य जानिकन मात्र यसमा प्रविष्ट हुनु श्रेयस्कर हुन्छ । कुलपूजा, वामपूजाका प्रशस्त आसन र यसको संस्कार एवं यसका अधिकारीहरूको विवेचना, आसनको शोधन, अनुकल्पहरूको रहस्य वर्णन त्यहाँ पाइन्छ । त्यस्तै पञ्च मकारको वर्णन, यसको आवश्यकता र संस्कार, पात्रवर्णन, देवतातर्पण र बलिविधानका रहस्य पनि त्यहाँ विवेचित

छन् । यो पक्ष गोपनीय र अधिकार प्राप्त साधकलाई मात्र जान्न एवं प्रयोग गर्नसक्ने हुनाले गुरुमुख गम्य भएको हुँदा यहाँ साधकले ग्रन्थबाट विस्तारमा ज्ञान प्राप्त गर्नु मुनासिब हुन्छ ।

पशु, वीर र दिव्य तीन प्रकारका साधक हुन्छन् । साधकका भेद अनुसार पूजास्थान पनि तीन प्रकारकै हुन्छन्- गौण, मुख्य र उत्तम । पशु पूजा गौण हुन्छ । वीरले यन्त्र पूजा गर्दछ, बिन्दुमा शक्तिको स्थापना गरेर इष्ट देवताको ध्यानपूर्वक पूजन गर्दछ, यो पूजा मुख्य हुन्छ र दिव्यले दिव्यचक्रमा गरेको पूजा उत्तम हुन्छ । जीवचक्रस्थतत्त्वको राम्रो ज्ञान गर्ने व्यक्ति दुर्लभ हुन्छ । यसबाट असम्भव वस्तु पनि सम्भव हुन्छ । त्यस्तो ज्ञानी व्यक्ति शिवतुल्य हुन्छ ।

तन्त्रशास्त्रमा पीठपूजाको महत्त्व पनि ज्यादै ठूलो छ । पीठको अर्थ यन्त्र हो । यन्त्रमा देवताको खास यन्त्र विधिपूर्वक लेखी, यसको संस्कार गरेर, देवताको प्रतिष्ठा गरी पूजन गर्नु श्रेयस्कर हुन्छ । यन्त्रपूजाको अभावमा अनधिकारीले मात्र प्रतिमा पूजा गर्न सक्तछ ।

कौल, वाम, आचार अनुसारको पूजामा शक्तिपूजा र पानको विशिष्ट विधान छ, तर यो पक्ष अनधिकारीको लागि होइन भन्ने कुरा सर्वत्र दृढरूपमा निषिद्ध गरिएको छ ।

पूजा समाप्त गरेर पूजागृहबाट बाहिर निस्केपछि भोजनकालीन कर्तव्यको पनि निर्देश ग्रन्थकारले गरेका छन् । भोजनका आसनको पनि विधान छ, अन्नका अधिष्ठात्री देवीहरू छन् । उनीहरूलाई समर्पण गर्ने मन्त्र छन् । वैदिक, तान्त्रिक मन्त्रहरू तिनमा पनि कौलाचारी, वामाचारी, कापालिक सबैका भिन्न-भिन्न भोजन गर्ने विधि छन् । यिनको अवलम्बन ठीक-ठीकसँग गरेमा भोजन बलवीर्यवर्धक, कान्ति र पुष्टिदायक, श्रेयस्कर आदि हुन सक्छन् । भोजन गरिसकेपछि पान खाने पनि विधान छ, यसको पनि वर्णन छ ।

प्रातःकालीन कृत्य जस्तै सायंकालीन कृत्यहरू पनि निर्दिष्ट छन् । त्रिवर्णस्थसाधक (ब्राह्मण, क्षत्रिय र वैश्य) ले वैदिक सन्ध्या गरिसकेपछि

तान्त्रिक सन्ध्या गर्नु पर्दछ । तर तुर्यवर्णवालाले तान्त्रिक मात्र सन्ध्या गर्नु पर्दछ । सन्ध्याको समय सूर्यास्तको समय वा रात्री उपयुक्त हुन्छ ।
सायंकालीन सन्ध्याको क्रममा नित्य शिवाबलिको विधान छ । त्यसपछि सायन्तनपूजाको पनि विधि वर्णित छ । त्यसपछि सायंकालको भोजन र शयनका विधिहरू पनि छन् ।

यो आह्निक साधकले दिनभरिमा गर्नुपर्ने कृत्यहरू सबैका लागि साध्य न हुन पनि सक्तछन् । खासगरी रोगीले सबै पूजाविधि पूर्ण गर्न सक्तैनन् । त्यस्ताले मूल मन्त्रलाई सम्झेर सूर्यमण्डल वा प्रतिमामा फूल समर्पण गर्नाले मात्र पनि सबै कृत्य पूर्ण हुन सक्तछन् । त्यस्तै जूठो, सुत्केरो परेकाले पनि सन्ध्या मानसिक गर्न सक्तछन् । आशौचमा वेदोच्चारण, शालग्राम र प्रतिमा आदिको स्पर्श वर्जित छ । त्यस्तै जड व्यक्तिले पनि केवल भावनात्मक पूजा गर्न सक्तछ ।

वास्तवमा पूजा तीन प्रकारका छन्- उत्तम, मध्यम र अधम । सम्पूर्ण उपकरणहरूको यथावत् प्रयोग गरेर गरिने पूजा उत्तम, जो पाइन्छ, तिनको प्रयोग गर्दै गरिने पूजा मध्यम र जलपुष्पद्वारा मात्र गरिने पूजा अधम हुन्छ । त्यस्तै सात्त्विक, राजस र तामस पूजाका प्रकारहरूका विषयमा केही चर्चा पहिले पनि भइसकेको हो, तैपनि मोटामोटीरूपमा भन्दा वेदप्रतिपादित, अकल्मष ब्रह्मर्षिहरूले गर्ने पूजा सात्त्विक, तपोनिष्ठ राजर्षिहरूले भगवत्तत्त्व जान्नेहरूले गर्ने पूजा राजस र स्त्री, वाल, वृद्धहरूले गर्ने पूजा तामस हुन्छ । अधिकारीका भेदअनुसार पूजा भिन्नभिन्न हुन सक्तछन् । आफ्नो परम्परानुसार दीक्षित व्यक्तिले गुरुको आज्ञा लिएर शास्त्रोक्त कर्म गरेमा भोग र मोक्ष दुवै प्राप्त हुन्छन्, यसमा सन्देह छैन ।

## उपसंहार -

अन्तमा महामात्य नवमी सिंहले एउटा रसिक भमराले विभिन्न पुष्परसलाई एकत्रित गरेजस्तै, अझ भनौं मधुमक्षिकाले सबैतिरबाट पुष्परसको संचय गरी मधुको रचना गरे जस्तै नाना तन्त्रहरूको सारवस्तु

एकत्रित गरेर प्रस्तुत तन्त्रचिन्तामणि ग्रन्थ तैयार पारेर साधकहरूको बड। हितकारक कार्य सम्पन्न गरेका छन् । यो त तन्त्रचिन्तामणि ग्रन्थको पूर्वभाग मात्र हो । अझ उत्तर भाग बाँकी नै छ । त्यसमा पनि यसमा जस्तै बीस प्रकाश अरू रहनेछन् । त्यहाँ देवताका विशिष्ट उपासना प्रक्रियाहरूको निर्देश गरिएको छ । त्यो झन् साधकका लागि नभई नहुने भाग हुनेछ भन्ने मलाई लाग्दछ ।

साधनाको संसार अपार छ । त्यसको वास्तविक रहस्य स्वयं ईश्वरले बाहेक अन्य संसारीले जानिसक्नु छैन । ईश्वरकै कृपाले यत्किञ्चित् जानेर शास्त्रविरुद्ध नहुने गरी ईश्वरकै प्रसादका लागि उपासना गर्न सकेमा जीवन धन्य हुने कुरा निर्विवाद छ ।

प्रस्तुत ग्रन्थ तन्त्रचिन्तामणिको सम्पादन कार्य धेरै पहिले नै थालि सकिएको थियो । तर आज आएर त्यसको आधा भाग सम्पादित रूपमा प्रकाशित हुँदैछ । आधा अझै बाँकी नै छ, त्यसको पनि समय अवश्य आउने छ । चाँडै नै आउने विश्वास गरिन्छ । तन्त्रको रहस्य यस सम्पादकले कति बुझ्न सक्यो होला र ? तैपनि ईश्वरको कृपाले यति कार्य भएपनि सम्पन्न हुन सक्यो । जो भयो, ईश्वरेच्छावशात् भयो । जो कमी छ सम्पादककै न्यूनता होला । यसमा गर्व गर्ने कुनै कुरा छैन । केवल यत्ति भन्नुछ-

**करचरणकृतं वाक्कायजं कर्मजं वा**
**श्रवणनयनजं वा मानसं वाऽपराधम् ।**
**विहितमविहितं वा सर्वमेतत् क्षमस्व**
**जय जय करुणाब्धे श्रीमहादेव शम्भो ॥**

यस कार्यमा मलाई धेरै सहयोग गर्नु हुने स्वयं नवमी सिंहका वंशज न:घल टोल निवासी साहु केशरबहादुर राजभण्डारी र स्व. पण्डित बुद्धिसागर पराजुलीप्रति म आभारी छु । बाङ्गेमुडा टोल निवासी तीर्थलाल

न:घ. भनी जसले ग्रन्थकार नवमीसिंहको जीवनीमाथि अनुसन्धान गरी मलाई सामग्री उपलब्ध गराउनुभयो, उहाँलाई धन्यवाद छ । विशेषत:- महेन्द्र संस्कृत विश्वविद्यालयका उपकुलपति श्रीमाधवराज गौतम, शिक्षाध्यक्ष प्रा. डा. श्रीबाबुराम पोखेल र कुल-सचिव श्रीदत्तात्रेय शर्मा दाहालप्रति हार्दिक कृतज्ञता टक्र्याउँदछु ।

साथै म.सं. वि. अनुसन्धानपरिषद्, म.सं.वि. प्रकाशनसमिति र यस ग्रन्थको आत्मीयतापूर्वक विभिन्न मातृकाहरू समेत परिशीलन गरी प्रकाशनोपयोगी सम्पादन गर्नुहुने विद्वान् सम्पादकहरू क्रमश: प्रा.डा. श्रीवेणीमाधव ढकाल, सह-प्रा.डा. श्रीदुर्गादत्त शर्मा उपाध्याय र उप-प्रा. श्रीमोतीलाल शर्मा रिजालप्रति कृतज्ञता व्यक्त गर्दै हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

२०५४ कार्तिक वैकुण्ठचतुर्दशी — प्रा. विद्यानाथ उपाध्याय

*****

# प्रथमः प्रकाशः

## – श्रीकालिकायै नमः–

यस्याः सृष्टमिदं कुलाकुलगतं तत्त्वेन सम्पादितं
भूतं पञ्चरसोज्वलञ्च निगमाश्चत्वार एव क्रमात् ।
भूताद्यं किल सागरेण सहितं नित्यं जगन्मण्डले
तस्यै साधकसिद्धिदानविमलप्रख्यातकीर्त्यै नमः ॥१॥
वन्दे ज्ञानवरप्रदाननिरतं पादारविन्दं गुरो-
र्दिव्यौघप्रभृतेश्च विघ्ननिचयध्वंसेन लम्बोदरम् ।
तन्त्राणां रचनाकरं पशुपतिं गुह्येश्वरीं कालिकां
ब्रह्मोपेन्द्रमहेन्द्रवन्दिततरां वज्रादिकां योगिनीम् ॥२॥
नेपालाधिपतेः समस्तधरणीजानीन्द्रचूडामणे-[1]
र्नानादानतपोव्रतादिकविताशीलस्य विद्यानिधेः ।
भूपालेन्द्रधराधिपस्य नवमीसिंहस्त्वमात्यः क्रमं
निर्णीयाशु बुधैः समं वितनुते श्रीतन्त्रचिन्तामणिम् ॥३॥
चेद् ग्रन्थलाघवधियाऽत्र निगूढगुप्तिः
कार्या तदा बुधजनैर्मम[2] मूढता स्यात् ।
तस्माद्रहस्यकथनं ध्रुवमस्ति लोके
प्राकट्यदोषशमनं कुरु देवि ! मातः ! ॥४॥
हे धीराः परमार्थदत्तमनसः सिद्धिं परामीप्सवः
तत्तद्दैवतसद्रहस्यमखिलं ज्ञातुञ्च चेदुत्सुकाः ।
तत्पश्यन्तु[3] भवन्त एनममलं ग्रन्थं मदीयं मुहु-
र्नानातन्त्रविलोकनोत्सुकतया नायासयध्वं मनः ॥५॥

---

[1] जारीन्द्र - इति क. मा. पा., यानीन्द्र - इति ख. मा. पा. ।

[2] मुग्धता - इति ख. मा. ।

[3] भवन्त ऋतममलम् - इति क.मा.पा. ।

तन्त्राणां वचनं येषां ग्रन्थेऽस्मिन् प्रकटीकृतम् ।
तेषां नामानि तन्त्रस्य चोत्पत्तिकथनं पुनः ॥६॥
१ आधिक्यमागमानाञ्च सृष्ट्युत्पत्तिक्रमस्ततः ।
कालिकाकृष्णयोस्तारारामयोश्चैकरूपता ॥ ७ ॥
निर्णयो दशविद्यायाः शिवशक्त्योरुपासना ।
श्यामायाः सर्वमूलत्वमुक्तमाद्यप्रकाशके ॥८॥
मन्त्रोद्धारःक्रमेणैव वामदक्षिणलक्षणम् ।
विद्यास्वाम्नायके मार्गे निर्णयश्च पृथक् पृथक् ॥९॥
आवश्यको मकारश्च चाम्नायाधीनतस्तु यः ।
गुरुं विना तन्त्र-मन्त्रेऽनधिकारिनिरूपणम् ॥१०॥
दीक्षाप्रशंसा गदिता द्वितीये तु प्रकाशके ।
श्रीगुरोः शिवतुल्यत्वं गुरुलक्षणनिर्णयः ॥११॥
गुरुं विनोपदेशश्च स्त्रीणां वामे स्वनायकात् ।
लक्षणाऽलक्षणे शिष्ये तयोराम्नायंनिर्णयः ॥१२॥
त्याज्यात्याज्यविवेकः स्यादुपदेशान्तरं तयोः ।
वैदिकादिषु मन्त्रेषु स्त्रीशूद्रौ नाधिकारिणौ ॥१३॥
जातेर्मनोश्च विप्रादौ देयादेयविवेचना ।
एतेषां संस्थितिर्ज्ञेया प्रकाशे तु तृतीयके ॥१४॥
तुर्यप्रकाशे संस्काराः षोडशैव तु मन्त्रिणः ।
तत्र नामप्रदानाख्ये चक्राणां लेखनं कृतम् ॥१५॥
मन्त्राणामार्यसंस्काराः षोडशैव प्रचोदिताः ।
मध्ये शापप्रदानन्तु पञ्चमे च प्रकाशके ॥१६॥
मासादिनिर्णयः षष्ठप्रकाशे तु प्रकीर्तितः ।
दीक्षाविधिर्धनाद्यादौ परीक्षाग्रहणं भुवः ॥१७॥

---

१. कृतादियुगभेदेन मार्ग एष पृथक् पृथक् - इति ख. मा. अधिकः पाठः ।

वास्तुयागविधेरादौ तस्योत्पत्तिः प्रकीर्तिता ।
तन्मण्डलं च शास्त्रोक्तं तत्र देवविनिर्णयः ॥१८॥
बलिमन्त्राश्च तन्त्रोक्ता वास्तुमण्डलदैवते ।
प्रकाशे सप्तमे प्रोक्ताश्चाष्टमेऽथ निगद्यते ॥१९॥
दिक् साधनं मण्डपस्य कुण्डादेर्लक्षणानि च ।
अङ्कुरारोपणं प्रोक्तं नवमे च प्रकाशके ॥२०॥
गुरोर्निमन्त्रणविधिर्दन्ते[1] काष्ठं शुभाशुभम् ।
स्वप्नसम्प्रार्थनविधिर्वह्नेः स्थितिविवेचनम् ॥२१॥
कुण्डसंस्कारपूर्वं हि वह्निसंस्थापनं पुनः ।
दीक्षाया दिनकृत्यं च तदङ्गहवनं ततः ॥२२॥
मन्त्रप्रदाने भेदोऽस्ति वामदक्षिणमार्गयोः ।
उपदेशः कुलस्त्रीणां दीक्षाभेदोपदेशकौ ॥२३॥
उपासनाविधिः स्वप्नलब्धमन्त्रस्य निर्णयः ।
[2] मनोर्गुरोश्च देवस्य त्यागो दशप्रकाशके ॥२४॥
क्रमदीक्षाविधिर्विद्याविशेषः परिकीर्तितः ।
पूर्णाभिषेककथनमेकादशप्रकाशके ॥२५॥
[3] आचारा दशधा प्रोक्ता महानीलादयः क्रमात् ।
श्यामादिविद्याविषयस्त्रयोदशप्रकाशके ॥२६॥
दिव्यवीरपशूनाञ्च भावा बालाप्रपूजने ।
योग्यायोग्यविवेकोऽस्ति चतुर्दशप्रकाशके ॥२७॥
सात्विकादिप्रभेदेन पूजा भिन्ना प्रकीर्तिता ।
पृथङ् मोक्षप्रद कर्म प्रातःकृत्यविधिस्ततः ॥२८॥

---

[1] धन - इति ख.मा.पा. ।

[2] मन्त्रंदेवगुरुत्यागी दशमेऽस्ति प्रकाशके - इति ख.मा.पा. ।

[3] गुरुभक्तिस्तयाऽऽचारौ प्रोक्तौ दक्षिणकौलयोः ।
धर्माधिकारिणौकौले वामे चार्कप्रकाशके ॥
- इति ख.मा.पा. ।

अजपाया विधानञ्च स्नानं नानाविधं स्मृतम् ।
विभूतिधारणं सन्ध्यावन्दनञ्च क्रमात् पुनः ॥२९॥
गायत्रीणां समुद्धारः प्रकाशे तिथिसङ्ख्यके ।
पूजाप्रशंसा द्वारार्चाऽऽसनं भूतापसारणम् ॥३०॥
भूतशुद्धिर्मातृकादिकलासंख्याप्रकाशके ।
अन्तर्यजनकर्माणि चार्घ्यादिस्थापने विधिः ॥३१॥
द्रव्याणि यन्त्रलिखने पीठनिर्णय एव च ।
शालग्रामशिलायाश्च उत्पत्तिर्लक्षणानि च ॥३२॥
हरीशाद्रिसुतासूर्यगणेशदिक्पतिग्रहाः ।
एतेषां भेदतो भेदः सम्यगुक्तः पृथक् पृथक् ॥३३॥
मुद्रा सर्वोपचारेषु प्रत्येकं लक्षणादिकम् ।
नित्यहोमविधिर्भूतबलिरारात्रिकं ततः ॥३४॥
देवताभेदतो भिन्ना करमाला प्रचोदिता ।
ब्रह्मार्पणादिकं सर्वं सप्तदशप्रकाशके ॥३५॥
कुलमार्गसमुत्पत्तिः पञ्चशुद्धिविधिस्ततः ।
शक्तिशुद्धिस्तु कौलादेर्विशेषन्यास निणर्यः ॥३६॥
द्रव्यदान[1]विवेकस्तदुत्पत्तिः पाककर्मणि ।
मांसादेर्निर्णयः सम्यङ् मकारस्यानुकल्पकम् ॥३७॥
आन्तरीयविशेषस्तु संस्कारकथनं क्रमात् ।
पात्रसंख्याप्रकथनं [2]पानश्रेष्ठादिनिर्णयः ॥३८॥
महापात्रस्य च पुनः साधनं लक्षणं शुचिः ।
श्रीपात्रस्थापनादिश्च तर्पणं तत्त्वशोधनम् ॥३९॥
वटुकादि बलिश्चाष्टादशमेऽस्ति प्रकाशके ।
पूजोपचारमन्त्राश्च कुलद्रव्यनिषेवनम् ॥४०॥

---

[1] विशेष - इति ख.मा. पा. ।
[2] मान - इति क.मा.ख.मा.पा. ।

उनविंशतिसंख्येऽस्मिन् प्रकाशे प्रकटीकृतम् ।
भोजनादिविधिः सायन्तनीयकृत्यलेखनम् ॥४१॥
शिवावलिर्निशाकृत्यं नित्यभेदविनिर्णयः ।
लिखितो विशतितमे प्रकाशे सर्वसम्मते ॥४२॥
श्यामापूजाक्रमस्त्वेकविंशत्याख्यप्रकाशके ।
स्तोत्रादिलिखनं सम्यग्द्वाविंशतिप्रकाशके ॥४३॥
महाकालादिनित्यानां मन्त्रोद्धारादिकं पुनः ।
त्रयोविंशतिसंख्येऽस्मिन् प्रकाशे प्रकटायते ॥४४॥
तारार्चनक्रमो वेदविंशत्याख्यप्रकाशके ।
प्रचण्डचण्डिकापूजा पञ्चविंशतिसंख्यके ॥४५॥
श्रीविद्यायाः क्रमः सम्यक् षड्विंशतिप्रकाशके ।
भैरवी च महालक्ष्मीर्मातङ्गी भुवनेश्वरी ।४६॥
धूमावती च वगला चासां पूजा पृथक् पृथक् ।
सप्तविंशतिसंख्येऽस्मिन् प्रकाशे प्रतिपादिता ॥४७॥
चक्रपूजा पूर्वकृत्यं सामग्रीलक्षणं ततः ।
द्विविधं यजनं तत्र दूतीनां लक्षणं पृथक् ॥४८॥
दशविद्याक्रमेणैव दूतीयागविधिस्ततः ।
चक्राचारः कृतोऽप्यष्टाविंशत्याख्यप्रकाशके ॥४९॥
प्रस्तारादिश्च यन्त्राणां क्रमाद्दक्षिणवामयोः ।
प्रतिष्ठा द्विविधा प्रोक्ता ह्यूनत्रिंशत्-प्रकाशके ॥५०॥
चलाऽचला द्विधा माला देवताऽऽम्नाय भेदतः ।
पृथक् पृथक् चला प्रोक्ता [1] रुद्राक्षादिकसम्भवा ॥५१॥
महाशङ्खदिभिर्भिन्नो मालाफलविनिर्णयः ।
ग्रन्थनादिविवेकस्तु संस्कारा [2] विविधास्तथा ॥५२॥

---

[1] रुद्राक्षसंभवादिकम् - क.मा.ख.मा.पा. ।

[2] मुण्डसाधनम् - इति ख.मा.पा. ।

महामालाविनिर्माणं संस्कारौ मुख्यभेदयोः ।
जाग्रतीकरणं तस्याः प्रोक्तं त्रिंशत्प्रकाशके ॥५३॥
कालश्चार्थस्ततोऽङ्गानि पुरश्चरणकर्मणः ।
विघ्नराजविधिर्विद्या विशेषाम्नायनिर्णयः ॥५४॥
[1] क्रमेण दशविद्यानां जपसंख्यादिनिर्णयः।
सर्वसिद्धिप्रदं स्थानं देवतानां पृथक् पृथक् ॥५५॥
पीठानां च समुत्पत्तिः क्षेत्रस्य ग्रहणे विधिः ।
कूर्मचक्रपरिज्ञानमभिषेकविधिस्ततः ॥५६॥
कार्याकार्यविचारश्च संकल्पकरणं ततः ।
जपस्य कालकथनं रहस्यं मनुसूतके ॥५७॥
मन्त्रविद्याविभेदेन प्रबोधकालनिर्णयः ।
तयोर्भेदो मन्त्रशिखा मन्त्रचैतन्यकं ततः ॥५८॥
क्रमेण दशविद्यायाः कुल्लुकाविधिरीरितः ।
सेतुर्विप्रादिभेदेन निर्वाणकथनं ततः ॥५९॥
शापोत्कीलनयोर्भेदः शापोद्धारोऽसितामनोः ।
मन्त्रस्य हृदयं चार्थनिर्णयो न विशेषतः ॥६०॥
जपस्याऽऽरम्भभेदादिः पुनर्वीरपुरस्क्रिया ।
अथवाऽन्यप्रकारेण विविधास्तु पुरस्क्रियाः ॥६१॥
शावरस्य च स्तोत्रादिश्चैकत्रिंशत्प्रकाशके ।
मन्त्रसिद्धेरुपायाश्च चितासाधनकर्म च ॥६२॥
वीरसाधनभेदाश्च [2] विद्यानाञ्च पृथक् पृथक् ।
[3] जपसंख्याप्रमाणञ्च युग्मत्रिंशत्प्रकाशके ॥६३॥

---

[1] ५५, ५६ श्लोकौ ख.मा. न स्तः ।

[2] वधानांच .... प्रमाणञ्च न प्राप्यते - इति ख.मा.पा. ।

[3] विद्याभेदं जपात्सिद्धिप्रदा संख्या मनोरपि ।
रहस्यक्रमयोगाञ्च त्रयस्त्रिंशत्प्रकाशके ॥
- इति ख.मा. अधिकः पाठः ।

१ नैमित्तिकञ्च काम्यञ्च कुलाकुलविनिर्णयः ।
ग्रहणं द्विविधं प्रोक्तं बाह्याभ्यन्तरभेदतः ॥६४॥
दमनारोपणोत्पत्तिर्दमनारोपणे विधिः ।
पवित्रारोपणोत्पत्तिः पवित्रारोपणे विधिः ॥६५॥
ग्रन्थिभेदो देवतायास्त्रय२ स्त्रिंशत्प्रकाशके ।
३ शारदीयविधानञ्च चतुस्त्रिंशत्प्रकाशके ॥६६॥
पशुदानविवेकस्तु पशुभेदादिनिर्णयः ।
देवतातृप्तिकालश्च पशोर्लक्षणवीक्षणम् ॥६७॥
निषेधोऽप्यनुकल्पश्च पूजामहिषप्रोक्षणम् ।
नराणां प्रोक्षणं खड्गलक्षणं पात्रनिर्णयः ॥६८॥
शुभाशुभञ्च नैवेद्यं पञ्चत्रिंशत्प्रकाशके ।
कुमारीपूजनविधौ तासां लक्षणनिर्णयः ॥६९॥
शुभाशुभादिसङ्केत ऋतुत्रिंशत्प्रकाशके ।
सामान्यतः काम्यविधिः षट्कर्मक्रमनिर्णयः ॥७०॥
तेषां प्रकीर्णकथनमासनादिनिरूपणम् ।
मन्त्रग्रथनभेदादिमालाकुण्डादिनिर्णयः ॥७१॥
होमद्रव्यप्रमाणञ्च सप्तत्रिंशत्प्रकाशके ।
क्रमेण दशविद्यायाः प्रयोगश्च पृथक् पृथक् ॥७२॥
प्रायश्चित्तविधिः पश्चादष्टात्रिंशत्प्रकाशके
साम्राज्यमुद्रिका पश्चात् यन्त्राणां लक्षणं क्रमात् ॥७३॥
मन्त्राणां धारणायोनचत्वारिंशत्प्रकाशके ।
प्रत्येकं मातृकावर्णध्यानादीनां निरूपणम् ॥७४॥
क्रमेण दशविद्याया मन्त्रभेदाः प्रकीर्तिताः ।

---

[1] नैमित्तिकस्य काम्यादि - इति क.मा.ख.मा.पा. ।

[2] चतुस्त्रिंशत्प्रकाशके- इति ख.मा.पा. ।

[3] शारदीयविधानञ्च- इति पाठः ख.मा. नास्ति ।

नाना प्रयोगमन्त्राः स्युश्चत्वारिंशत्प्रकाशके ॥७५॥
कुमारी योगिनी काली बाराही कुब्जिका परा ।
नारायणी मुण्डमाला चामुण्डा भुवनेश्वरी ॥७६॥
गौतमी समया सौत्रामणिर्विजयमालिनी ।
लीलावती गुह्यसिद्धिर्मालिनी परमेश्वरी ॥७७॥
प्रचण्डचण्डिका शम्भुनित्या कात्यायनीति च ।
फेत्कारी भैरवी भूतसिद्धिः सिद्धेश्वरी तथा ॥७८॥
मेरुनीलमतङ्गश्च शक्तिसङ्गमभैरवौ ।
सांख्यायनं किरणाख्यं गन्धर्वभूतभैरवौ ॥७९॥
वीरार्दनं वीरभद्रं रुद्रकालानलोत्तरे ।
सिद्धसारस्वतं हाहारावो मन्थानभैरवः ॥८०॥
सिद्धेश्वरो विश्वसारस्तथा बौधायनं पुनः ।
माहेश्वरमहाहारौ कालाग्निश्च मृडान्यपि ॥८१॥
एतेषां मन्त्रतो ज्ञेयस्तन्त्रशब्दः पृथक् पृथक् ।
सिद्धनाथो महाकालो दक्षिणामूर्तिरेव च ॥८२॥
सुरेन्द्रब्रह्मगोरक्षाः [1] वैशम्पायन एव च ।
नन्दिकेश्वरवायव्यौ वाराही शाम्भवीति च ॥८३॥
सनत्कुमारः श्रीकण्ठोऽप्यगस्त्यस्तत्त्वसारकः [2] ।
वशिष्ठः पुनरेतेषामन्ते स्यात् संहिताऽभिधा ॥८४॥
ब्रह्मविष्णू रुद्रसिद्धौ देव्युमाचन्द्रशक्तयः ।
एतेषामन्ततो ज्ञेयं यामलं चाष्टसंख्यकम् ॥८५॥
कुलवीरो मन्त्रभावचूडामणिभिरीचितः [3] ।
हयग्रीवनारदाभ्यां महाकपिलतो भवेत् ॥८६॥

[1] गोरक्ष्या - इति ख. मा. पा. ।
[2] तत्त्वसारकौ - इति ख.मा.पा. ।
[3] भिरीरितः- इति क.मा.ख.मा.पा. ।

